# विषय सूची

## नागरिकता टोली सम्बन्धी व्यवस्था

# नागरिकताको प्रमाणपत्र वितरण कार्यविधि निर्देशिका, २०६३

**नेपाल सरकारको स्वीकृत मिति**

**२०६३।९।४**

**परिच्छेद-१**

## प्रारम्भिक

(१) **परिभाषा र उद्देश्य :**

(क) **परिभाषा:**

विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस निर्देशिकामा परेका निम्नलिखित शब्दको अर्थ निम्नानुसार सम्झनु पर्नेछ :-

१. "ऐन" भन्नाले नेपाल नागरिकता ऐन, २०६३ सम्झनु पर्छ।

२. "नियमावली" भन्नाले नेपाल नागरिकता नियमावली, २०६३ सम्झनु पर्छ।

३. "निर्देशिका" भन्नाले नागरिकताको प्रमाणपत्र वितरण कार्यविधि निर्देशिका, २०६३ सम्झनु पर्छ ।

४. "टोली" भन्नाले नागरिकता वितरण गर्ने प्रयोजनका लागि नेपाल सरकारले स्थानीय स्तरमा खटाएको नागरिकता वितरण गर्ने टोली सम्झनु पर्छ।

(ख) **उद्देश्य :**

ऐतिहासिक जनआन्दोलनको परिणामस्वरूप नेपालको सार्वभौमसत्ता नेपाली जनतामा निहित रहेको र राज्यशक्तिको स्रोत नेपाली जनता नै रहेको विद्यमान अवस्थामा विगतमा नेपाली नागरिकले नागरिकताको प्रमाणपत्र प्राप्त गर्न नसक्दा अप्ठेरो परिरहेको अवस्थालाई महसूस गरी प्रतिनिधिसभाको घोषणा, २०६३ ले नेपाल राज्यभित्रको नागरिकतासम्बन्धी समस्याको समाधान यथाशीघ्र गर्ने सङ्कल्प लिए अनुरूप २०६३ साल कार्तिक २२ गते भएको राजनीतिक सहमतिको आधारमा नेपालको नागरिकता प्राप्ति, समाप्ति र तत्सम्बन्धी अन्य कुराको व्यवस्था गर्नका लागि नेपाल नागरिकता ऐन, २०६३ र नेपाल नागरिकता नियमावली, २०६३ जारी भई लागू भएको छ। नागरिकता वितरण गर्ने कार्यविधिका सम्बन्धमा नेपाली नागरिकताको प्रमाणपत्र वितरण कार्यमा खटिने कर्मचारी र सर्वसाधारण जनतालाई यससम्बन्धी राम्रो जानकारी उपलब्ध हुन सकोस्, कुनै द्विविधा वा कठिनाइ नहोस् भन्ने दृष्टिकोणले देहायमा उल्लिखित मूलभूत उद्देश्य राखी यो निर्देशिका तयार गरिएको छ :-

– नागरिकतासम्बन्धी ऐन, नियम र कार्य प्रणालीको जानकारी गराउन,

– सहज ढङ्गले नागरिकता प्रदान गर्नका लागि पालन गर्नु पर्ने शर्त र विधिहरू स्पष्ट पार्न,

- नागरिकता प्रमाणपत्र प्राप्त गर्न आवेदन गर्ने व्यक्तिहरूको छानवीन गरी बालिग नेपाली नागरिकलाई छिटो, छरितो, सरल, पारदर्शी, न्यायपूर्ण एवं निष्पक्ष ढंगबाट नागरिकता प्रमाणपत्र दिने प्रक्रिया सहज बनाउन,

- गैर नेपालीले नेपाली नागरिकताको प्रमाणपत्र बदनियतपूर्वक लिनसक्ने सम्भावना रोक्न,

- नागरिकता वितरणको कार्यमा खटिने सबै नागरिकता टोलीको काममा एकरूपता ल्याउन,

- नागरिकता टोलीमा संलग्न हुने कर्मचारीलाई कार्य सरलीकरण गरी उनीहरूको दक्षता अभिवृद्धि गर्न,

- सर्वसाधारणलाई नागरिकता प्राप्त गर्ने कार्यविधिका बारेमा जानकारी गराउन,

- झुठो विवरण दिई नेपाली नागरिकताको प्रमाणपत्र लिए दिएमा हुनसक्ने दण्ड सजायका बारेमा पूर्व जानकारी दिई निरुत्साहित गर्न,

## परिच्छेद-२

## वंशजको नाताले नेपाली नागरिकता प्राप्तिसम्बन्धी व्यवस्था

### (२) वंशजको नाताले नेपाली नागरिकताको प्राप्तिसम्बन्धी ऐनको व्यवस्था :

१. कुनै व्यक्तिको जन्म हुँदा निजका बाबु वा आमा नेपालको नागरिक रहेछ भने त्यस्तो व्यक्ति वंशजको नाताले नेपालको नागरिक हुनेछ ।

(ऐनको दफा (३))

२. वंशजको नाताले नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहने सोह्र वर्ष उमेर पूरा भएको व्यक्तिले तोकिएको अधिकारीसमक्ष देहायका कागजातका प्रतिलिपि संलग्न राखी निवेदन दिनु पर्नेछ :-

(क) बाबु वा आमा वा आफ्नो वंशतर्फ तीन पुस्ताभित्रको नातेदारको नेपाली नागरिकताको प्रमाणपत्र,

तर विदेशी नागरिकसँग विवाह गरेकी नेपाली नागरिक महिलाको हकमा यो व्यवस्था लागू हुनेछैन ।

(ख) जन्मस्थान र नाता खुल्ने गरी गाउँ विकास समिति वा नगरपालिकाले गरिदिएको सिफारिस ।

(ऐनको दफा ८ को उपदफा (१))

### (३) वंशजको नाताले नेपाली नागरिकताको प्राप्तिसम्बन्धी नियमावलीमा भएको व्यवस्था :

वंशजको नाताले नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहने सोह्र वर्ष उमेर पूरा भएको नेपाली नागरिकले सम्बन्धित प्रमुख जिल्ला अधिकारीसमक्ष देहायका कागजात संलग्न राखी अनुसूची-१ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ :-

(क) बाबु वा आमा वा आफ्ना वंशजतर्फका तीन पुस्ताभित्रको नातेदारको नेपाली नागरिकताको प्रमाणपत्र,

(ख) जन्मस्थान र नाता खुल्ने गरी सम्बन्धित स्थानीय निकायले गरिदिएको सिफारिस वा जन्मदर्ता प्रमाणपत्र,

(ग) खण्ड (क) बमोजिम तीन पुस्ताभित्रको नातेदारको नागरिकताको प्रमाणपत्र पेश गरेको अवस्थामा उक्त नातेदारसँगको नाता खुल्ने नाता प्रमाणित पत्र ।

(नियमावलीको नियम ३ को उपनियम (१))

### (४) वंशजको नाताले नागरिकता प्राप्तिसम्बन्धी कार्यविधि :

कुनै व्यक्तिको जन्म हुँदा निजको बाबु वा आमा नेपालको नागरिक रहेछ भने त्यस्तो व्यक्तिलाई वंशजको नाताले नागरिकताको प्रमाणपत्र जारी गर्दा देहायबमोजिमको कार्यविधि अवलम्वन गर्नु पर्नेछ :–

१. अनुसूची-१ बमोजिमको पूरा विवरण भर्न लगाई रु ५।- को टिकट टाँस्न लगाउनु पर्दछ र स्थानीय निकायको सिफारिस भए नभएको यकिन गर्नु पर्नेछ ।

२. अनुसूचीका साथ पेश भएको नागरिकताको प्रमाणपत्रको आधिकारिकता हेरी सोको प्रतिलिपि लिई रुजु गर्नु पर्छ । त्यसरी रुजु गर्ने कर्मचारीले दस्तखत समेत गर्नु पर्नेछ ।

३. अनुसूचीका साथ नागरिकता पेश गर्ने बाबु वा आमाबाट सनाखत गराउनु पर्छ र सनाखत गराउने कर्मचारीले समेत दस्तखत गर्नु पर्नेछ ।

४. बाबु वा आमा नभएमा आफ्नो वंशजतर्फका तीन पुस्ताभित्रको नातेदारको नेपाली नागरिकताको प्रमाणपत्र र निवेदकको वंश तर्फको तीन पुस्ता खुल्ने नाता प्रमाणको आधारमा तोकिएको ढाँचामा सनाखत गराई सहीछाप समेत गराउनु पर्नेछ ।

५. नागरिकता प्रमाणपत्र नलिँदै विवाह भएकी नेपाली महिलाले नागरिकताको प्रमाणपत्र लिनका लागि उल्लिखित कागजातहरूका अतिरिक्त निम्न थप कागजातहरूसमेत पेश गर्नु पर्नेछ :-

(क) विवाह दर्ता प्रमाण,

(ख) पति वा ससुराको नागरिकताको प्रमाणपत्र,

(ग) पति, सासू वा ससुरा वा जेठाजु वा देवरमध्ये कसैको सनाखत,

(घ) माइती पट्टिको आमा वा बाबु वा दाजु वा भाइको नागरिकताको प्रतिलिपि ।

६. बाबु वा आमाको र छोराछोरीको नागरिकता प्रमाणपत्रमा ठेगाना परिवर्तन गरी लिन चाहेमा बसाई सराईको प्रमाणपत्र पेश गर्नु पर्नेछ ।

७. ठेगाना परिवर्तन गरी नागरिकता प्रमाणपत्र माग भएमा बाबु वा आमाको नागरिकताको आधिकारिकता यकिन गर्नु पर्नेछ ।

८. त्यसरी आधिकारिकता यकिन गर्नु परेमा सम्बन्धित जिल्लामा समेत बुझ्न सकिनेछ ।

## माथिका प्रमाण पेश गर्न नसक्नेहरूलाई वंशजको नाताले नागरिकता प्रमाणपत्रको प्राप्तिसम्बन्धी व्यवस्था

**(५) प्रमाण पेश गर्न नसक्नेहरूलाई वंशजको नाताले नागरिकता प्रमाणपत्रको प्राप्तिसम्बन्धी ऐनमा भएको व्यवस्था :**

१. कुनै व्यक्तिले ऐनको दफा ८ को उपदफा (१) बमोजिमका प्रमाणहरू निवेदनसाथ पेश गर्न नसकेको अवस्थामा तोकिएको अधिकारीले स्थलगत सरजमिन र निवेदकलाई चिन्ने सोही वडामा बसोबास गर्ने कम्तीमा तीनजना नेपाली नागरिकताको प्रमाणपत्र लिइसकेका व्यक्तिले सरजमिनस्थलमै गरेको सनाखतको आधारमा नेपाली नागरिकताको प्रमाणपत्र दिनसक्नेछ ।

२. उपदफा (४) बमोजिम स्थलगत सरजमिन गर्दा निवेदक नेपालमा जन्म भई निरन्तर रूपमा स्थायी बसोबास भएको तथ्य स्पष्ट रूपमा उल्लेख भएको हुनु पर्नेछ ।

(ऐनको दफा ८ को उपदफा (४) र (५))

**(६) प्रमाण पेश गर्न नसक्नेहरूलाई वंशजको नाताले नागरिकता प्रमाणपत्रको प्राप्तिसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

नियम ३ को उपनियम (१) बमोजिका प्रमाण निवेदन साथ पेश गर्न नसक्ने नेपाली नागरिकलाई देहायका कागजातका आधारमा नेपाली नागरिकताको प्रमाणपत्र दिन सकिनेछ :-

(क) निवेदकका बाबु वा आमा नेपाली नागरिक भएकोले निज वंशजको नाताले नेपालको नागरिक भएको र नेपालमा जन्म भई निरन्तर रूपमा नेपाल सरहदभित्र स्थायी रूपमा बसोबास गरी आएको व्यहोरा खुल्ने गरी स्थानीय निकायका प्रतिनिधिको रोहबरमा अनुसूची-३ बमोजिमको

ढाँचामा नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त स्थानीय बासिन्दाहरूले गरिदिएको स्थलगत सर्जमिन,

(ख) सम्बन्धित वडामा बसोबास गर्ने तीन जना नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त नेपाली नागरिकले अनुसूची-४ बमोजिमको ढाँचामा सर्जमिन स्थलमै गरिदिएको सनाखत ।

तर नागरिकताको सिफारिस गर्ने वा नागरिकता प्रदान गर्ने अधिकारीलाई सनाखत गर्ने व्यक्तिले शंकास्पद रुपमा सनाखत गरेको लागेमा त्यस्तो अधिकारीले त्यस उपर थप छानबीन गर्न सक्नेछ ।

(नियमावलीको नियम ३ को उपनियम (२))

**(७) प्रमाण पेश गर्न नसक्नेहरूलाई वंशजको नाताले नागरिकता प्रमाणपत्रको प्राप्तिसम्बन्धी कार्यविधि :**

१. निवेदकले अनुसूची-१ बमोजिमको ढाँचामा पूरा विवरण भरी निवेदन दिनु पर्नेछ ।

२. नियम ३ को उपनियम (१) बमोजिम नागरिकता प्राप्तिका लागि प्रमाण पेश गर्न नसक्ने नेपाली नागरिकलाई देहायका प्रक्रिया पुर्‍याई नेपाली नागरिकताको प्रमाणपत्र प्रदान गर्नुपर्छ :-

(क) स्थानीय निकायका प्रतिनिधिको रोहबरमा अनुसूची-३ बमोजिमको ढाँचामा स्थलगत सरजमिन गराउनु पर्दछ ।

(ख) सरजमिनमा बसेका बाहेकका तीन जना सोही वडामा बस्ने नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त नागरिकबाट अनुसूची-४ बमोजिमको ढाँचामा पूरा विवरण भरी सनाखत गराउनु पर्छ । सनाखतमा वस्ने व्यक्तिको नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि संलग्न गर्नु पर्नेछ । तर नेपाल नागरिकता ऐन, २०६३ जारी हुनु अघि नागरिकता लिएका व्यक्तिहरुले मात्र सनाखत गर्न सक्नेछन् ।

३. नेपाल नागरिकता नियमावली, २०६३ को नियम ३ को उपनियम (२) बमोजिम निवेदन प्राप्त भएपछि सोही दिन निवेदकको तीन पुस्ते खुलाई सूचना सार्वजनिक गर्नु पर्नेछ । यसरी सूचना सार्वजनिक गरेपछि टोलीको हकमा तीन दिनभित्र र जिल्ला प्रशासन कार्यालयको हकमा सात दिनभित्रमा निर्णय दिइसक्नु पर्नेछ । निवेदनका सम्बन्धमा उजुरी परी विवाद भएमा त्यस्तो निवेदनको निर्णय प्रमुख जिल्ला अधिकारीले गर्नु पर्नेछ ।

४. नियम ३ को उपनियम (२) को खण्ड (ख) बमोजिम नागरिकताको सिफारिस गर्ने वा नागरिकता प्रदान गर्ने अधिकारीलाई सनाखत गर्ने व्यक्तिले शंकास्पद रुपमा सनाखत गरेको लागेमा त्यस्तो अधिकारीले त्यस उपर थप छानबीन गर्न सक्नेछ ।

५. यस बमोजिम नागरिकता प्राप्त गर्ने व्यक्तिको अभिलेख वंशजको अभिलेखमा जनाई राख्नु पर्नेछ ।

## पितृत्व/मातृत्वको ठेगान नभएका व्यक्तिलाई दिइने नागरिकता प्रमाणपत्र

**(८) पितृत्व/मातृत्वको ठेगान नभएका व्यक्तिलाई दिइने नागरिकता प्रमाणपत्र सम्बन्धी ऐनमा भएको व्यवस्था :**

नेपाल सरहदभित्र फेला परेको पितृत्व/मातृत्वको ठेगान नभएको प्रत्येक नाबालक निजको बाबु वा आमाको पत्ता नलागेसम्म वंशजको नाताले नेपालको नागरिक मानिनेछ ।

(ऐनको दफा ३ को उपदफा (३))

## (९) <u>पितृत्व/मातृत्वको ठेगान नभएका व्यक्तिलाई दिइने नागरिकता प्रमाणपत्रसम्बन्धी नियमावलीमा भएको व्यवस्था :</u>

१. नेपाल सरहदभित्र फेला परेको पितृत्व/मातृत्वको ठेगान नभएको नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहने सोह्र वर्ष उमेर पूरा भएको व्यक्तिले देहायका कागजात संलग्न राखी अनुसूची-१ बमोजिमको ढाँचामा सम्बन्धित प्रमुख जिल्ला अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ :-

(क) नेपाल सरकारबाट स्वीकृति प्राप्त बालमन्दिर वा अनाथ बालबालिका संरक्षण गर्ने संघ संस्था वा अनाथालयको संरक्षणमा हुर्के बढेको भए त्यस्तो संस्थाको सिफारिस,

(ख) कुनै व्यक्ति विशेषले प्रचलित कानून बमोजिम संरक्षकत्व प्राप्त गरी पालनपोषण गरेको भए पालन पोषण गर्ने व्यक्तिको नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

(ग) खण्ड (क) बमोजिमको संस्थामा पालनपोषण गर्ने संस्थाका प्रमुखबाट गरिदिएको सनाखत वा खण्ड (ख) बमोजिम पालनपोषण गर्ने व्यक्तिले गरिदिएको सनाखत ।

२. उपनियम (३) बमोजिम निवेदकको पितृत्व वा मातृत्वको सम्बन्धमा थप कुरा बुझ्नु पर्ने भएमा आवश्यकताअनुसार स्थानीय निकायको सिफारिस वा प्रहरी प्रतिवेदन माग गर्न सकिनेछ ।

३. पितृत्व/मातृत्वको ठेगान नभएको व्यक्तिको नागरिकताको प्रमाणपत्रको बाबु वा आमाको नाम उल्लेख हुनु पर्ने स्थानमा "पितृत्व/मातृत्वको ठेगान नभएको" व्यहोरा जनाई संरक्षकको नाम, थर र ठेगाना उल्लेख गर्नु पर्नेछ ।

(नियमावलीको नियम ३ को उपनियम (३), (४) र (५))

## (१०) <u>पितृत्व/मातृत्वको ठेगान नभएका व्यक्तिलाई दिइने नागरिकता प्रमाणपत्र वितरणसम्बन्धी कार्यविधि :</u>

नेपाल सरहदभित्र फेला परेको पितृत्व/मातृत्वको ठेगान नभएको प्रत्येक नाबालक निजको बाबु वा आमा पत्ता नलागेसम्म वंशजको नाताले नेपालको नागरिक मानिनेछ । त्यस्तो व्यक्तिलाई नागरिकता प्रमाणपत्र जारी गर्दा निम्नबमोजिमका प्रक्रियाहरू अवलम्बन गर्नु पर्छ :-

१. पितृत्व वा मातृत्वको ठेगान नभएको व्यक्तिलाई वंशजको नाताले नेपाली नागरिकता प्रमाणपत्र जारी गर्नु पर्छ ।

२. यस्तो नागरिकता प्राप्तिको लागि स्थानीय निकायबाट सिफारिस भएको अनुसूची-१ अनुसारको फाराम भरी पेश गर्न लगाउनु पर्छ ।

३. कुनै व्यक्ति विशेषले पालनपोषण गरेको भए पालनपोषण गर्ने व्यक्तिबाट सबै व्यहोरा खुलाई सनाखत गराउनु पर्छ । त्यसरी सनाखत गराउँदा निजको नागरिकताको प्रमाणपत्रको आधिकारिता यकिन गरी सोको प्रतिलिपि संलग्न गर्नु पर्नेछ ।

४. बालमन्दिर वा यस्तै प्रकृतिका अनाथ बालबालिका संरक्षण गर्न नेपाल सरकारबाट स्वीकृति प्राप्त संघ संस्था वा अनाथालयको संरक्षणमा हुर्के बढेको भए त्यस्तो संस्थाको सिफारिस र सो संस्थाको प्रमुखबाट सनाखत गराउनु पर्नेछ ।

५. पितृत्वको वा मातृत्वको सम्बन्धमा थप कुरा बुझ्नु पर्ने भएमा आवश्यकता अनुसार स्थानीय निकायको सिफारिस वा प्रहरी प्रतिवेदन लिन सकिनेछ ।

६. यस्तो नागरिकताको प्रमाणपत्रको बाबु वा आमाको नामको महलमा- "पितृत्व/मातृत्वको ठेगान नभएको" उल्लेख गरी संरक्षकको नाम,थर र ठेगाना खुलाउनु पर्नेछ ।

## कर्मचारीको परिवारले नागरिकताको प्रमाणपत्र प्राप्तिसम्बन्धी व्यवस्था

**(११) कर्मचारीको परिवारले नागरिकताको प्रमाणपत्र प्राप्तिसम्बन्धी ऐनमा भएको व्यवस्था :**

कुनै व्यक्तिको जन्म हुँदा निजका बाबु वा आमा नेपालको नागरिक रहेछ भने त्यस्तो व्यक्ति वंशजको नाताले नेपालको नागरिक हुनेछ ।

(ऐनको दफा ३)

**(१२) कर्मचारीको परिवारले नागरिकताको प्रमाणपत्र प्राप्तिसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

१. कुनै कर्मचारीका परिवारले त्यस्तो कर्मचारी कार्यरत रहेको जिल्लाको जिल्ला प्रशासन कार्यालयबाट नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहेमा देहायका कागजात संलग्न गरी प्रमुख जिल्ला अधिकारीसमक्ष अनुसूची-१ बमोजिमको ढाँचामा दुई प्रति निवेदन दिनु पर्नेछ :-

(क) बाबु वा आमाको नेपाली नागरिकताको प्रमाणपत्र,

(ख) कर्मचारी बहाल रहेको कार्यालयको सिफारिस,

(ग) विवाहित महिलाको हकमा पतिको नागरिकता र विवाह दर्ता प्रमाणपत्र,

(घ) सनाखत गराउँदा अन्यत्रबाट नागरिकता नलिएको कुरा खुलाउनु पर्नेछ ।

२. उपनियम (१) बमोजिम प्राप्त कागजातका आधारमा नागरिकताको प्रमाणपत्र प्रदान गरी त्यसरी प्रदान गरिएको नागरिकता प्रमाणपत्रको अभिलेख उक्त नागरिकता जारी गर्ने कार्यालयमा राखी सम्बन्धित कर्मचारीको स्थायी ठेगाना भएको जिल्ला प्रशासन कार्यालयलाई समेत जानकारी दिनु पर्नेछ ।

स्पष्टीकरण : यस नियमको प्रयोजनको लागि -

(१) "कर्मचारी" भन्नाले नेपाल सरकारको कोषबाट तलब भत्ता खाने कर्मचारी वा संस्थानका कर्मचारी वा शिक्षक वा प्राध्यापक सम्झनु पर्छ ।

(२) "परिवार" भन्नाले खण्ड (१) मा उल्लिखित कर्मचारीसँग बस्ने तथा निज आफैँले पालनपोषण गर्नु पर्ने पति, पत्नी, छोरा, अविवाहिता छोरी, धर्मपुत्र, अविवाहिता धर्मपुत्री, बाबु, आमा वा सौतेनी आमा सम्झनु पर्छ र सो शब्दले पुरुष र अविवाहिता महिला कर्मचारीको हकमा निजको बाजे, बज्यै तथा विवाहिता महिला कर्मचारीको हकमा निजको सासू, ससुरा समेतलाई जनाउँछ ।

(नियमावलीको नियम १६ को उपनियम (१) र (२))

**(१३) कर्मचारीको परिवारले नागरिकताको प्रमाणपत्र प्राप्तिसम्बन्धी कार्यविधि :**

कर्मचारीको परिवारको नाताले आफू कार्यरत रहेको जिल्ला प्रशासन कार्यालयबाट वंशजको नाताले नेपाली नागरिकता प्राप्तिको लागि निवेदन गर्न आएमा :-

१. निवेदकले अनुसूची-१ बमोजिमको ढाँचामा दुई प्रति निवेदन दिनु पर्नेछ ।

२. निवेदन साथ बाबु वा आमाको नेपाली नागरिकताको प्रमाणपत्र संलग्न गर्नु पर्नेछ ।

३. कर्मचारी कार्यरत रहेको कार्यालयको प्रमुखबाट सिफारिस गरिएको पत्र पेश गर्नु पर्नेछ ।

४. सम्बन्धित कर्मचारीबाट पहिले नागरिकता नलिएको व्यहोरा खुलाई सनाखत गराउनु पर्नेछ ।

५. विवाहित महिलाको हकमा पतिको नागरिकता र विवाह दर्ता प्रमाणपत्र पेश गर्नु पर्नेछ ।

६. यस्तो नागरिकताको अभिलेख छुट्टै रजिष्टरमा राख्नु पर्नेछ ।

७. नागरिकता जारी भएपछि सोसँग सम्बन्धित कागजातहरू एक/एक प्रति सो कर्मचारीको स्थायी ठेगाना भएको जिल्लाको जिल्ला प्रशासन कार्यालयमा पठाउनु पर्नेछ र एक प्रति आफ्नो कार्यालयमा अभिलेख राख्नु पर्नेछ ।

८. सम्बन्धित जिल्लाको जिल्ला प्रशासन कार्यालयले जानकारी प्राप्तिको जनाउ नागरिकता प्रमाणपत्र जारी गर्ने कार्यालयलाई दिई प्राप्त अभिलेखहरू व्यवस्थित गरी सुरक्षित साथ राख्नु पर्नेछ ।

## परिच्छेद-३

## जन्मको आधारमा नागरिकताको प्राप्तिसम्बन्धी व्यवस्था

**(१४) जन्मको आधारमा नागरिकताको प्राप्तिसम्बन्धी ऐनमा भएको व्यवस्था :**

१. सम्वत् २०४६ साल चैत्र मसान्तसम्म नेपाल सरहदभित्र जन्म भई नेपालमा स्थायी रूपले बसोबास गर्दै आएको व्यक्ति जन्मको आधारमा नेपालको नागरिक हुनेछ ।

२. ऐनको दफा ४ को उपदफा (१) बमोजिम नागरिकताको प्रमाणपत्र प्राप्त गर्न चाहने व्यक्तिले संविधानसभाको निर्वाचन हुनु अगावै निवेदन दिने र नागरिकताको प्रमाणपत्र प्रदान गर्ने व्यवस्था तोकिएबमोजिम हुनेछ ।

३. उपदफा (२) बमोजिमको समयावधिभित्र विशेष कारणवश निवेदन दिन नसक्ने व्यक्तिले यो ऐन प्रारम्भ भएको मितिले दुई वर्षभित्र तोकिएबमोजिम निवेदन दिनसक्नेछ ।

(ऐनको दफा ४ को उपदफा (१), (२) र (३))

४. ऐनको दफा ४ बमोजिम जन्मको आधारमा नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहने सोह्र वर्ष उमेर पूरा भएको व्यक्तिले तोकिएको अधिकारीसमक्ष देहायका कागजातको प्रतिलिपि संलग्न राखी निवेदन दिनु पर्नेछ :-

(क) निजको जन्म नेपालमा भएको र नेपालमा स्थायी रूपमा बसोबास गर्दै आएको व्यहोरा खुल्ने गरी सम्बन्धित गाउँ विकास समिति वा नगरपालिकाले गरिदिएको सिफारिस,

(ख) आफ्नो वा परिवारको नामको जग्गाधनी दर्ता प्रमाणपूर्जा वा मोहियानी हकको प्रमाणपत्र वा घरधुरी प्रमाण वा निर्वाचन आयोगले तयार गरेको मतदाता नामावलीमा निजको वा निजको बाबु वा आमाको नाम समावेश भएको प्रमाण ।

(ऐनको दफा ८ को उपदफा (२))

**(१५) जन्मको आधारमा नागरिकताको प्राप्तिसम्बन्धी नियममा भएको व्यवस्था :**

१. ऐनको दफा ४ को उपदफा (१) बमोजिम जन्मको आधारमा नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहने सोह्र वर्ष उमेर पूरा भएको नेपाली नागरिकले सम्बन्धित प्रमुख जिल्ला अधिकारीसमक्ष देहायका कागजात संलग्न राखी अनुसूची-१ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ :-

(क) निवेदकको जन्म नेपालभित्र भएको र निजले निरन्तर नेपालमा स्थायी रूपमा बसोबास गर्दै आएको व्यहोरा खुल्ने गरी सम्बन्धित स्थानीय निकायले गरिदिएको सिफारिस,

(ख) आफ्नो वा परिवारको नामको जग्गाधनी दर्ता प्रमाणपूर्जा वा मोहीयानी हकको प्रमाणपत्र वा घरधुरी प्रमाण वा निर्वाचन आयोगले तयार गरेको मतदाता नामावलीमा निजको वा निजको बाबु वा आमाको नाम समावेश भएको प्रमाण,

स्पष्टीकरण : यस खण्डको प्रयोजनको लागि “परिवार” भन्नाले एकाघरका वा छुट्टिई भिन्न बसेका बाबु, आमा, सौतेनी आमा, छोरा, अविवाहिता छोरी र छोराबुहारी समेतलाई सम्झनु पर्छ ।

२. उपनियम (१) बमोजिम नागरिकताको प्रमाणपत्र प्राप्त गर्न चाहने व्यक्तिले संविधानसभाको निर्वाचन हुनु अगावै प्रमुख जिल्ला अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ ।

३. ऐनको दफा ४ को उपदफा (३) बमोजिमको समयावधिभित्र प्राप्त भएका निवेदनहरूका सम्बन्धमा त्यस्ता निवेदन दर्ता भएको मितिले एक महिनाभित्र प्रमुख जिल्ला अधिकारीले निर्णय गरिसक्नु पर्नेछ ।

(नियमावलीको नियम ४ को उपनियम (१), (२) र (४))

**(१६) <u>जन्मको आधारमा नागरिकताको प्राप्तिसम्बन्धी कार्यविधिः</u>**

जन्मको आधारमा नागरिकताको प्रमाणपत्र जारी गर्दा देहायबमोजिमको प्रक्रिया अवलम्वन गर्नु पर्नेछ :-

१. अनुसूची-१ बमोजिमको ढाँचामा स्थानीय निकायको सिफारिस सहितको निवेदन दिनु पर्नेछ ।

२. निवेदक वि.सं. २०४६ साल चैत्र मसान्तभित्र नेपालमा जन्मिएको हो भन्ने कुरा यकिन गर्न जन्मस्थान र जन्ममिति खुलेको गाउँ विकास समिति वा नगरपालिकाको सिफारिस वा जन्मदर्ता प्रमाण पेश गर्नु पर्नेछ,

३. निरन्तर स्थायी बसोबास खुल्ने गरी गाउँ विकास समिति वा नगरपालिका वा महानगरपालिकाले बसोबास प्रमाणित गरिदिएको किटानी कागजात संलग्न भएको हुनु पर्नेछ । त्यस्तो कागजात उपर कुनै शंका लागेमा नागरिकता जारी गर्ने अधिकारीले थप कुराहरू बुझ्नसक्नेछ ।

४. आफ्नो वा परिवारको नामको जग्गा धनी दर्ता प्रमाणपूर्जा वा मोहियानी हकको प्रमाणपत्र वा निर्वाचन आयोगले तयार गरेको मतदाता नामावलीमा निजको वा निजको बाबु वा आमाको नाम समावेश भएको प्रमाण पेश गर्नु पर्नेछ ।

५. नेपाल नागरिकता नियमावली, २०६३ को नियम ४ को उपनियम (३) बमोजिम निवेदन प्राप्त भएपछि सोही दिन निवेदकको तीन पुस्ते खुलाई सूचना सार्वजनिक गर्नु पर्नेछ । यसरी सूचना सार्वजनिक गरेपछि टोलीको हकमा तीन दिनभित्र र जिल्ला प्रशासन कार्यालयको हकमा सात दिनभित्रमा निर्णय दिइसक्नु पर्नेछ । निवेदनका सम्बन्धमा उजुरी परी विवाद भएमा त्यस्तो निवेदनको निर्णय प्रमुख जिल्ला अधिकारीले गर्नु पर्नेछ ।

## <u>माथिका प्रमाण पेश गर्न नसक्नेहरूलाई जन्मको आधारमा नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी व्यवस्था</u>

**(१७) <u>प्रमाण पेश गर्न नसक्नेहरूलाई जन्मको आधारमा नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी ऐनमा भएको व्यवस्था :</u>**

१. कुनै व्यक्तिले ऐनको दफा ८ को उपदफा (२) बमोजिमका प्रमाणहरू निवेदनसाथ पेश गर्न नसकेको अवस्थामा तोकिएको अधिकारीले स्थलगत सरजमिन र निवेदकलाई चिन्ने सोही वडामा बसोबास गर्ने कम्तीमा तीनजना नेपाली नागरिकताको प्रमाणपत्र लिईसकेका व्यक्तिले सरजमिन स्थलमै गरेको सनाखतको आधारमा नेपाली नागरिकताको प्रमाणपत्र दिनसक्नेछ ।

२. उपदफा (४) बमोजिम स्थलगत सरजमिन गर्दा निवेदक नेपालमा जन्म भई निरन्तर रूपमा स्थायी बसोबास भएको तथ्य स्पष्ट रूपमा उल्लेख भएको हुनु पर्नेछ ।

(ऐनको दफा ८ को उपदफा (४) र (५)

**(१८) प्रमाण पेश गर्न नसक्नेहरूलाई जन्मको आधारमा नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

१. नियम ४ को उपनियम (१) बमोजिमका प्रमाण निवेदन साथ पेश गर्न नसक्ने व्यक्तिलाई ऐनको दफा ८ को उपदफा (४) बमोजिम देहायका कागजातका आधारमा नेपाली नागरिकताको प्रमाणपत्र जारी गर्न सकिनेछ :-

(क) निवेदक नेपालमा जन्म भई निरन्तर रूपमा नेपाल सरहदभित्र स्थायी रूपमा बसोबास गरी आएको व्यहोरा खुल्ने गरी स्थानीय निकायका प्रतिनिधिको रोहबरमा अनुसूची-५ बमोजिमको ढाँचामा नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त स्थानीय बासिन्दाहरूले गरिदिएको स्थलगत सरजमिन,

(ख) सम्बन्धित वडामा बसोबास गर्ने नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त तीन जना नेपाली नागरिकले अनुसूची-६ बमोजिमको ढाँचामा सर्जमिनस्थलमै गरिदिएको सनाखत ।

तर नागरिकताको सिफारिस गर्ने वा नागरिकता प्रदान गर्ने अधिकारीलाई सनाखत गर्ने व्यक्तिले शंकास्पद रुपमा सनाखत गरेको लागेमा त्यस्तो अधिकारीले त्यस उपर थप छानबीन गर्न सक्नेछ ।

२. उपनियम (३) बमोजिम नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त गर्न निवेदन दिने व्यक्तिहरूको सूची सोही दिन सार्वजनिक गर्नु पर्नेछ ।

(नियमावलीको नियम ४ को उपनियम (३) र (६))

**(१९) प्रमाण पेश गर्न नसक्नेहरूलाई जन्मको आधारमा नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी कार्यविधि :**

१. नियमावलीको नियम ४ को उपनियम (३) बमोजिम नागरिकता प्राप्तिका लागि प्रमाण पेश गर्न नसक्ने नेपाली नागरिकलाई देहायका प्रक्रिया पुर्‍याई नेपाली नागरिकताको प्रमाणपत्र जारी गर्नु पर्छ :-

- ऐनको दफा ८ को उपदफा (४) बमोजिमका कागज प्रमाण पेश गर्न नसक्ने निवेदकले गाउँ विकास समिति/नगरपालिकामा अनुसूची-१ को ढाँचामा निवेदन दिनसक्नेछ । निवेदन पेश भएपछि गाउँ विकास समिति/नगरपालिकाले सर्जमिन र सनाखतको प्रकृयामा लैजान नागरिकता जारी गर्ने अधिकारीसमक्ष अनुरोध गरी पठाउनेछ ।
- यसरी निवेदन प्राप्त भएपछि निवेदक जुन वडामा बसोबास गरिरहेको छ सोही वडामा स्थायी रूपमा बसोबास गरिरहेका नागरिकताको प्रमाणपत्र प्राप्त कम्तीमा ५ जना व्यक्तिहरूबाट निवेदक नेपालमा जन्म भई निरन्तर रूपमा नेपाल सरहदभित्र स्थायी रूपमा बसोबास गरी आएको व्यहोरा खुल्ने गरी अनुसूची-५ बमोजिमको ढाँचामा स्थलगत सर्जमिन मुचुल्का गराउनु पर्नेछ ।

(क) स्थानीय निकायका प्रतिनिधि र सम्भव भएसम्म राजनैतिक दलका स्थानीय प्रतिनिधिको रोहबरमा स्थलगत सरजमिन गराउनु पर्दछ ।

(ख) स्थलगत सर्जमिन तोकिएको ढाँचामा छ/छैन राम्ररी जाँच गर्नु पर्छ ।

(ग) खण्ड (ख) बमोजिम जाँच गर्दा अनुसूचीबमोजिमको विवरण नभरेको भए सो पूरा गर्न लगाउनु पर्छ ।

- स्थलगत सरजमिनमा बसेका बाहेकका तीन जना सोही वडामा बस्ने नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त नागरिकबाट अनुसूची-६ बमोजिमको ढाँचामा पूरा विवरण भरी सनाखत गराउनु पर्छ ।

    (क) त्यसरी सनाखत गराउँदा सर्जमिनमा बसेका व्यक्ति बाहेकका सोही वडामा बसोबास गर्ने तीन जना नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त व्यक्तिबाट अनुसूची-६ बमोजिमको ढाँचामा सनाखत गराई तीनै जनाको नागरिकताको प्रमाणपत्रको प्रतिलिपि संलग्न गर्नु पर्नेछ । तर नेपाल नागरिकता ऐन, २०६३ जारी हुनु अघि नागरिकता लिएका व्यक्तिहरुले मात्र सनाखत गर्न सक्नेछन् ।

    (ख) सनाखत गर्ने व्यक्तिले पेश गरेको नागरिकता र प्रतिलिपिको सक्कल नक्कल भिडाई सनाखत गराउने कर्मचारीले रुजु गरी दस्तखत गर्नु पर्नेछ ।

२. स्थलगत सर्जमिनमा बस्ने व्यक्ति र सनाखतमा बस्ने व्यक्ति फरक फरक हुनु पर्नेछ ।

३. सनाखत र स्थलगत सर्जमिन गराउने कर्मचारी र प्रमाणित गर्ने कर्मचारीको नाम, थर र पद समेत उल्लेख गरी दस्तखत गर्नु पर्नेछ ।

४. नेपाल नागरिकता नियमावली, २०६३ को नियम ४ को उपनियम (६) बमोजिम निवेदन प्राप्त भएपछि सोही दिन निवेदकको तीन पुस्ते खुलाई सूचना सार्वजनिक गर्नु पर्नेछ । यसरी सूचना सार्वजनिक गरेपछि टोलीको हकमा तीन दिनभित्र र जिल्ला प्रशासन कार्यालयको हकमा एक महिना भित्रमा निर्णय दिइसक्नु पर्नेछ । निवेदनका सम्बन्धमा उजुरी परी विवाद भएमा त्यस्तो निवेदनको निर्णय प्रमुख जिल्ला अधिकारीले गर्नु पर्नेछ ।

५. नियम ४ को उपनियम (३) को खण्ड (ख) बमोजिम नागरिकताको सिफारिस गर्ने वा नागरिकता प्रदान गर्ने अधिकारीलाई सनाखत गर्ने व्यक्तिले शंकास्पद रुपमा सनाखत गरेको लागेमा त्यस्तो अधिकारीले त्यस उपर थप छानबीन गर्न सक्नेछ ।

६. यस बमोजिम नागरिकता प्राप्त गर्ने व्यक्तिको अभिलेख जन्मकै अभिलेखमा जनाई राख्नु पर्नेछ ।

## परिच्छेद-४

## अङ्गीकृत नागरिकताको प्राप्तिसम्बन्धी व्यवस्था :

**(२०) वैवाहिक अङ्गीकृत नागरिकताको प्राप्तिसम्बन्धी ऐनमा भएको व्यवस्था :**

१. नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा तोकिएको अधिकारीसमक्ष तोकिएको ढाँचामा निवेदन दिनु पर्नेछ । त्यसरी निवेदन दिँदा नेपाली नागरिकसँग भएको वैवाहिक सम्बन्धको र आफूले विदेशी नागरिकता त्याग्ने कारबाही चलाएको निस्सा पनि साथै पेश गर्नु पर्नेछ ।

(ऐनको दफा ५ को उपदफा (१))

२. अनुसूची बमोजिमको शपथग्रहण गराई तोकिएको ढाँचामा नेपाली नागरिकताको प्रमाणपत्र प्रदान गरिनेछ ।

(ऐनको दफा ५ को उपदफा (६))

**(२१) वैवाहिक अङ्गीकृत नागरिकताको प्राप्तिसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

१. नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा देहायका कागजात संलग्न गरी सम्बन्धित प्रमुख जिल्ला अधिकारीसमक्ष अनुसूची-७ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ :-

(क) नेपाली नागरिकसँग भएको वैवाहिक सम्बन्ध खुल्ने गरी सम्बन्धित स्थानीय निकायले गरिदिएको सिफारिस,

(ख) निजले विदेशी नागरिकता त्याग्ने कारबाही चलाएको निस्सा ।

२. उपनियम (१) बमोजिम प्राप्त निवेदन उपर छानबीन गर्दा निवेदक अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र पाउन योग्य देखिएमा प्रमुख जिल्ला अधिकारीले निजलाई अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र जारी गर्न सक्नेछ ।

(नियमावलीको नियम ५ को उपनियम (१) र (२))

**(२२) वैवाहिक अङ्गीकृत नागरिकताको प्राप्तिसम्बन्धी कार्यविधि :**

नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा अनुसूची-७ बमोजिमको ढाँचामा स्थानीय निकायले गरिदिएको सिफारिससाथ निवेदन दिनु पर्छ ।

निवेदन साथ निम्न कागजात पेश गर्न लगाउनु पर्छ :-

(क) गाउँ विकास समिति वा नगरपालिकाले गरिदिएको सिफारिस र विवाहदर्ता प्रमाणपत्र,

(ख) विदेशी नागरिकता त्याग्ने कारबाही चलाएको निस्सा,

(ग) पतिको नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

(घ) वैवाहिक अङ्गीकृत नागरिकता प्राप्त गर्नुअगावै पतिको मृत्यु भइसकेको अवस्थामा पतिको मृत्युदर्ता प्रमाणपत्र र पतिसँग नाता खुल्ने तीन पुस्ता भित्रको व्यक्तिको नागरिकता प्रमाणपत्रको प्रतिलिपि र सनाखत,

(ङ) नागरिकता पाउने व्यक्तिलाई ऐनको अनुसूची बमोजिमको शपथ ग्रहण गराउनु पर्नेछ ।

(च) पति वा अन्यको नागरिकताको आधिकारिकता समेत यकिन गर्नु पर्नेछ ।

(छ) वैवाहिक अङ्गीकृत नागरिकताको अभिलेख छुट्टै रजिष्टरमा राख्नु पर्नेछ ।

**(२३) विदेशी नागरिकसँग विवाह गरेकी नेपाली महिलाबाट जन्मिएका सन्तानको नागरिकता प्राप्तिसम्बन्धी ऐनमा भएको व्यवस्था :**

१. विदेशी नागरिकसँग विवाह गरेकी नेपाली नागरिक महिलाबाट जन्मिएका छोराछोरीको हकमा निजको नेपालमा जन्म भई नेपालमा स्थायी बसोबास गरेको र बाबुको नागरिकताको आधारमा निजले विदेशी मुलुकको नागरिकता लिएको रहेनछ भने निजलाई तोकिएबमोजिम अङ्गीकृत नागरिकता प्रदान गर्न सकिनेछ ।

२. उपदफा (२) बमोजिम अङ्गीकृत नागरिकता प्राप्त गर्न चाहने व्यक्तिले देहायका कागजात संलग्न गरी तोकिएको अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ :-

(क) आमाको नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

(ख) नेपालमा जन्म भई स्थायी बसोबास गरेको व्यहोरा खुल्ने सम्बन्धित गाउँ विकास समिति वा नगरपालिकाको सिफारिस,

(ग) बाबुको नागरिकताको आधारमा कुनै विदेशी मुलुकको नागरिकता नलिएको निस्सा ।

(ऐनको दफा ५ को उपदफा (२) र (३))

३. अनुसूची बमोजिमको शपथग्रहण गराई तोकिएको ढाँचामा नेपाली नागरिकताको प्रमाणपत्र प्रदान गरिनेछ ।

(ऐनको दफा ५ को उपदफा (६))

**(२४) विदेशी नागरिकसँग विवाह गरेकी नेपाली महिलाबाट जन्मिएका सन्तानको नागरिकता प्राप्तिसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

१. विदेशी नागरिकसँग विवाह गरेकी नेपाली नागरिक महिलाबाट जन्मिएका सन्तानको हकमा देहायका कागजात सहित अनुसूची-७ बमोजिमको ढाँचामा प्रमुख जिल्ला अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ :-

(क) आमाको नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि,

(ख) नेपालमा जन्म भई स्थायी बसोबास गरेको व्यहोरा खुल्ने सम्बन्धित स्थानीय निकायको सिफारिस,

(ग) बाबुको नागरिकताको आधारमा निजले विदेशी मुलुकको नागरिकता नलिएको निस्सा ।

२. उपनियम (१) बमोजिम निवेदन प्राप्त भएपछि प्रमुख जिल्ला अधिकारीले आवश्यक देखेमा सम्बन्धित नगरपालिकाको प्रमुख वा गाउँ विकास समितिको अध्यक्षसँग आवश्यक कुराहरू बुझी आफ्नो रायसहित निवेदन मन्त्रालयसमक्ष पठाउनु पर्नेछ ।

(नियमावलीको नियम ७ को उपनियम (१) र (३))

(२५) **विदेशी नागरिकसँग विवाह गरेकी नेपाली महिलाबाट जन्मिएका सन्तानको नागरिकता प्राप्तिसम्बन्धी कार्यविधि :**

१. अनुसूची-७ बमोजिमको ढाँचामा स्थानीय निकायको सिफारिससाथ प्रमुख जिल्ला अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ ।

२. आमाको नेपाली नागरिकताको प्रमाणपत्रको प्रतिलिपि पेश गर्नु पर्नेछ ।

३. नेपालमा जन्म भई स्थायी बसोबास गरेको व्यहोरा खुल्ने सम्बन्धित स्थानीय निकायको सिफारिसपत्र पेश गर्नु पर्नेछ ।

४. बाबुको नागरिकताको आधारमा निजले विदेशी मुलुकको नागरिकता नलिएको निस्सा पेश गर्नु पर्नेछ ।

५. प्रमुख जिल्ला अधिकारीले आवश्यक देखेमा सम्बन्धित गाउँ विकास समितिका अध्यक्ष तथा नगरपालिकाका प्रमुखसँग आवश्यक कुराहरू बुझी आफ्नो रायसहित निवेदन मन्त्रालय समक्ष पठाउनु पर्नेछ ।

६. प्रमुख जिल्ला अधिकारीको रायसहितको निवेदनउपर अध्ययन गरी नेपाल सरकार, गृह मन्त्रालयले नागरिकता दिने वा नदिने निर्णय गर्न सक्नेछ ।

७. नागरिकता दिने गरी निर्णय गरेमा ऐनको अनुसूची बमोजिमको ढाँचामा शपथग्रहण गराई नागरिकताको प्रमाणपत्र जारी गर्नु पर्नेछ ।

## अङ्गीकृत नागरिकता लिनु अघि जन्मिएका सन्तानको अङ्गीकृत नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी व्यवस्था

(२६) **अङ्गीकृत नागरिकता लिनुअघि जन्मिएका सन्तानको अङ्गीकृत नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी ऐनमा भएको व्यवस्था :**

१. ऐनको दफा ५ को उपदफा (४) मा जुनसुकै कुरा लेखिएको भए तापनि अङ्गीकृत नेपाली नागरिकता प्राप्त गरेको व्यक्तिको सन्तानमध्ये निजले सो नागरिकता प्राप्त गर्नुभन्दा पहिले जन्मेको सन्तानले तोकिएबमोजिम अङ्गीकृत नेपाली नागरिकता प्राप्त गर्न सक्नेछ ।

२. यस दफाबमोजिम अङ्गीकृत नेपाली नागरिकता पाउने व्यक्तिलाई अनुसूचीबमोजिमको शपथग्रहण गराई तोकिएको ढाँचामा नेपाली नागरिकताको प्रमाणपत्र प्रदान गरिनेछ र त्यस्तो प्रमाणपत्र पाएको मितिदेखि त्यस्तो व्यक्ति नेपालको अङ्गीकृत नागरिक हुनेछ ।

(ऐनको दफा ५ को उपदफा (५) र (६))

(२७) **अङ्गीकृत नागरिकता लिनु अघि जन्मिएका सन्तानको अङ्गीकृत नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

१. ऐनको दफा ५ को उपदफा (५) बमोजिम अङ्गीकृत नेपाली नागरिकता प्राप्त गरेको व्यक्तिको सन्तान मध्ये निजले सो नागरिकता प्राप्त गर्नुभन्दा पहिले जन्मेका सन्तानले अनुसूची-७ बमोजिम सम्बन्धित प्रमुख जिल्ला अधिकारीसमक्ष निवेदन दिनसक्नेछ । निवेदन साथ नाता प्रमाणित पत्र, बाबु वा आमाको नागरिकताको प्रमाणपत्रको प्रतिलिपि र निज नेपालमा बसोबास गरिरहेको व्यहोराको स्थानीय निकायले गरिदिएको सिफारिस संलग्न गर्नु पर्नेछ ।

२. उपनियम (५) बमोजिम प्राप्त निवेदन उपर छानबीन गर्दा निवेदक अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र पाउन योग्य देखिएमा प्रमुख जिल्ला अधिकारीले निजलाई अनुसूची-८ बमोजिमको ढाँचामा अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र दिनसक्नेछ ।

(नियमावलीको नियम ७ को उपनियम (५) र (६))

**(२८) <u>अङ्गीकृत नागरिकता लिनु अघि जन्मिएका सन्तानको अङ्गीकृत नागरिकता प्रमाणपत्र प्राप्तिसम्बन्धी कार्यविधि :</u>**

१. स्थानीय निकायको सिफारिस सहित अनुसूची-७ बमोजिमको ढाँचामा प्रमुख जिल्ला अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ ।

२. बाबु वा आमाको नेपाली नागरिकताको प्रमाणपत्र पेश गर्न लगाई सनाखत गराउनु पर्दछ ।

३. बाबु वा आमासँग निवेदकको नाता प्रमाणित पत्र संलग्न हुनु पर्छ ।

४. नेपालमा बसोबास गरिरहेको व्यहोरा खुल्ने गाउँ विकास समिति वा नगरपालिकाले गरिदिएको किटानी सिफारिस संलग्न गराउनु पर्छ ।

५. निवेदकको जन्ममिति र जन्म स्थान खुल्ने गरी गाउँ विकास समिति, नगरपालिकाले गरिदिएको सिफारिस वा जन्मदर्ता प्रमाण पेश गर्न लगाउनु पर्छ ।

६. नेपालमा अध्ययन गरेको भए शैक्षिक योग्यताको प्रमाणपत्र ।

७. नेपालमा स्थायी बसोबास गरी काम गरेको भए सोको प्रमाण ।

८. मतदाता नामावलीमा नाम भएको भए वा मतदाता परिचयपत्र प्राप्त गरेको भए सोको प्रमाण ।

९. नेपाल नागरिकता नियमावली, २०६३ को नियम ७ को उपनियम (५) बमोजिम निवेदन प्राप्त भएपछि सोही दिन निवेदकको तीन पुस्ते खुलाई सूचना सार्वजनिक गर्नु पर्नेछ । यसरी सूचना सार्वजनिक गरेपछि सात दिनभित्रमा प्रमुख जिल्ला अधिकारीले निर्णय दिइसक्नु पर्नेछ ।

१०. निवेदक अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त व्यक्तिकै सन्तान हो भन्ने कुराको यकिन प्रमुख जिल्ला अधिकारीले गर्नु पर्छ ।

११. प्रमुख जिल्ला अधिकारीले नेपाली नागरिकताको प्रमाणपत्र पाउन योग्य देखेमा अनुसूची-८ बमोजिमको ढाँचामा अङ्गीकृत नेपाली नागरिकताको प्रमाणपत्र दिनसक्नेछ ।

## परिच्छेद-५

## पुनः नेपाली नागरिकता कायम हुनेसम्बन्धी व्यवस्था

(२९) **पुनः नेपाली नागरिकता कायम हुनेसम्बन्धी ऐनमा भएको व्यवस्था :**

कुनै नेपाली नागरिकले विदेशी मुलुकको नागरिकता प्राप्त गरेपछि पुनः नेपालमा आई बसोबास गरेको र विदेशी मुलुकको नागरिकता त्यागेको निस्सा तोकिएको अधिकारीलाई दिएमा त्यस्तो निस्सा दर्ता भएको मितिदेखि निजको नेपाली नागरिकता पुनः कायम हुनेछ ।

(ऐनको दफा ११)

(३०) **पुनः नेपाली नागरिकता कायम हुनेसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

१. ऐनको दफा ११ बमोजिम नेपालको नागरिकता त्यागी विदेश गएको कुनै व्यक्तिले पुनः नेपाली नागरिकता प्राप्त गर्न चाहेमा विदेशको नागरिकता त्यागेको निस्सा सहित निजलाई पहिले नागरिकताको प्रमाणपत्र प्रदान गर्ने मन्त्रालय वा सम्बन्धित जिल्ला प्रशासन कार्यालयसमक्ष अनुसूची-११ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ ।

२. उपनियम (१) बमोजिमको सूचनाको निवेदन प्राप्त भएपछि अनुसूची-१२ बमोजिमको ढाँचामा सूचना दर्ताको जानकारी दिई नागरिकताको प्रमाणपत्र जारी गर्ने अधिकार प्राप्त अधिकारीले साविककै नागरिकताको विवरणसहितको नेपाली नागरिकताको प्रमाणपत्र जारी गर्नेछ ।

(नियमावलीको नियम ११ को उपनियम (१) र (२))

(३१) **पुनः नेपाली नागरिकता कायम हुनेसम्बन्धी कार्यविधि :**

नेपालको नागरिकता त्यागी विदेश गएको व्यक्तिले ऐनको दफा ११ बमोजिम विदेशको नागरिकता त्यागी पुनः नेपालकै नागरिक हुन चाहेमा त्यस्ता व्यक्तिले नियमावलीको नियम ११ को उपनियम (१) अनुसार अनुसूची-११ बमोजिमको ढाँचामा रु. ५/- को टिकट टाँसी अधिकार प्राप्त अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ ।

१. त्यस्तो व्यक्तिले पहिले जुन जिल्लाबाट नागरिकता प्रमाणपत्र लिएको हो सोही जिल्लाको जिल्ला प्रशासन कार्यालयमा निवेदन दिनु पर्छ ।

२. पहिले नेपाली नागरिक रहेको प्रमाणस्वरूप नेपाली नागरिकता त्याग गर्नु अगाडि लिएको नेपाली नागरिकताको फोटोकपी संलग्न राख्न लगाउनु पर्छ । सो नभएमा नागरिकता लिएको मिति र नागरिकता त्याग गरेको मिति स्पष्ट लेख्न लगाउनु पर्दछ ।

३. निवेदकबाट पेश हुन आएका निवेदन तथा प्रमाण ठीक हो/होइन भनी जाँच गर्नुपर्छ ।

४. निवेदनसाथ विदेशको नागरिकता त्यागेको निस्सा संलग्न गर्न लगाउनु पर्छ ।

५. पहिले नागरिकता परित्याग गरेकै व्यक्ति हो भन्ने कुराको एकीन गर्नु पर्छ ।

६. निवेदकको व्यहोरा ठीक भएमा प्रमुख जिल्ला अधिकारीले साबिक बमोजिमकै नागरिकता जारी गर्नुपर्छ ।

## परिच्छेद-६

## नागरिकताको प्रमाणपत्र रद्द गर्नेसम्बन्धी व्यवस्था

### (३२) नागरिकता प्रमाणपत्र रद्द गर्नेसम्बन्धी ऐनमा भएको व्यवस्था :

कुनै नेपाली नागरिकले झुठो विवरण दिई नेपाली नागरिकताको प्रमाणपत्र लिएको प्रमाणित हुन आएमा तोकिएको अधिकारीले त्यस्तो नागरिकताको प्रमाणपत्र रद्द गर्नेछ ।

(ऐनको दफा १२)

### (३३) नागरिकता प्रमाणपत्र रद्द गर्नेसम्बन्धी नियमावलीमा भएको व्यवस्था :

१. ऐनको दफा १२ बमोजिम कसैले झुठो विवरण दिई नेपाली नागरिकताको प्रमाणपत्र लिएको प्रमाणित हुन आएमा देहायबमोजिमका निकायले त्यस्तो नेपाली नागरिकता प्रमाणपत्र रद्द गर्नु पर्नेछ :-

(क) मन्त्रालयबाट जारी भएको भए सो मन्त्रालयले,

(ख) जिल्ला प्रशासन कार्यालय वा अन्य निकायबाट जारी भएको भए सम्बन्धित प्रमुख जिल्ला अधिकारीले,

(ग) खण्ड (ख) बमोजिम प्रमुख जिल्ला अधिकारीले रद्द गरेको नेपाली नागरिकता प्रमाणपत्रको विवरणसहितको जानकारी क्षेत्रीय प्रशासन कार्यालय र मन्त्रालयमा पठाउनु पर्नेछ ।

(नियमावलीको नियम १२)

### (३४) नागरिकता प्रमाणपत्र रद्द गर्नेसम्बन्धी कार्यविधि :

१. नेपाली नागरिकले नागरिकताको प्रमाणपत्र लिँदा लेखिएको विवरण झुट्ठा ठहर्ने गरी अदालतबाट फैसला भएको अवस्थामा नागरिकताको प्रमाणपत्र रद्द गर्नेतर्फ कारबाही गर्नु पर्छ । गृह मन्त्रालयबाट जारी भएको भए गृह मन्त्रालयले रद्द गर्ने र अन्य निकायबाट जारी भएको भए प्रमुख जिल्ला अधिकारीले रद्द गरी अभिलेखमा जनाउनु पर्छ ।

२. नेपाली नागरिकले नागरिकता प्रमाणपत्र लिँदा भूलवस व्यहोरा फरक परेकोमा बाहेक तात्विक असर पर्ने गरी कसैले जानी जानी झुट्ठा विवरण पेश गरी नागरिकता प्रमाणपत्र लिएको व्यहोरा अनुसन्धानबाट पुष्टि हुन आएमा प्रमुख जिल्ला अधिकारीले प्रचलित कानून बमोजिम कारबाहीको लागि सम्बन्धित निकायमा पठाउनसक्नेछ । तर सो विषयले अदालतमा प्रवेश पाइसकेको भए अदालतको फैसलापछि अरू कारबाही शुरु गर्नु पर्नेछ ।

३. कुनै व्यक्तिले झुट्ठा विवरण दिई दुई वा दुईभन्दा बढी नागरिकता प्रमाणपत्र लिएको रहेछ भने पहिलो पल्ट लिएको नागरिकता प्रमाणपत्र कायम गरी पछिल्लो पटक लिएको नागरिकता प्रमाणपत्र प्र.जि.अ.ले निर्णय गरी रद्द गर्नु पर्नेछ । यसरी रद्द गरिएको व्यहोरा अभिलेखमा जनाउनु पर्छ । रद्द गरिएको जानकारी गृह मन्त्रालय, क्षेत्रीय प्रशासन कार्यालयहरूका साथै अन्य सबै जिल्ला प्रशासन कार्यालयहरूमा दिनु पर्छ ।

## परिच्छेद-७

## नेपाली नागरिकताबाट हटाउनेसम्बन्धी व्यवस्था

### (३५) नेपाली नागरिकताबाट हटाउनेसम्बन्धी ऐनमा भएको व्यवस्था :

१. कुनै विदेशी व्यक्तिले झुठ्ठा विवरण वा बयान दिई नेपाली नागरिक हो भनी झुक्याई नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त गरेको कुरा प्रमाणित हुन आएमा नेपाल सरकारले निजको नेपाली नागरिकताको प्रमाणपत्र रद्द गरी निजलाई नेपाली नागरिकबाट हटाउन आदेश दिनेछ।

२. यस दफाबमोजिम नेपाल सरकारले कुनै व्यक्तिलाई नेपालको नागरिकताबाट हटाउने गरी दिएको आदेशउपर पैंतीस दिनभित्र सम्बन्धित पुनरावेदन अदालतमा पुनरावेदन लाग्नसक्नेछ।

(ऐनको दफा १४ को उपदफा (१) र (२))

३. दफा १४ बमोजिम नेपाली नागरिकताबाट हटाईएका व्यक्तिहरूको नामावली प्रत्येक वर्ष नेपाल राजपत्रमा प्रकाशन गरिनेछ।

(ऐनको दफा १९)

### (३६) नेपाली नागरिकताबाट हटाउनेसम्बन्धी कार्यविधि :

१. कुनै व्यक्तिले झुट्ठा विवरण पेश गरी नेपालको नागरिकता लिएको उजुरी, गोप्य सूचना वा अन्य कुनै पनि किसिमबाट प्राप्त हुन आएको जानकारीको आधारमा अनुसन्धान शुरु गर्न सकिनेछ।

२. नागरिकताबाट हटाउनेसम्बन्धी अनुसन्धान कार्य जिल्ला प्रशासन कार्यालयले गर्नेछ।

३. गृह मन्त्रालय वा क्षेत्रीय प्रशासन कार्यालयले आवश्यक देखेमा छुट्टै अनुसन्धान टोली खटाई अनुसन्धान गर्न सक्नेछ।

४. नेपाल सरकारको जानकारीमा आएको वा उजुरी प्राप्त भई अनुसन्धानको लागि पठाइएको वा क्षेत्रीय प्रशासन कार्यालयमा वा जिल्ला प्रशासन कार्यालयमा प्राप्त भएको जानकारी वा उजुरीबाट समेत सम्बन्धित कार्यालयले प्रारम्भिक अनुसन्धान शुरु गर्नु गराउनु पर्छ।

५. क्षेत्रीय प्रशासन कार्यालय र जिल्ला प्रशासन कार्यालयबाट प्रारम्भिक अनुसन्धान शुरु हुनासाथ सोको जानकारी गृह मन्त्रालयमा पठाउनु पर्छ।

६. क्षेत्रीय प्रशासक वा प्र.जि.अ.ले आफू मातहतका कर्मचारीबाट समेत अनुसन्धान गराउनसक्नेछन्। अनुसन्धानको क्रममा आवश्यकता अनुसार प्रहरी र अन्य निकायको समेत सहयोग लिन सकिनेछ। अनुसन्धानको क्रममा अनुसन्धानकर्तालाई सम्बन्धित सबैले सहयोग पुऱ्याउनु पर्छ।

७. अनुसन्धानको क्रममा आवश्यक पर्ने सम्बन्धित पक्षलाई उपस्थित गराउने, बयान लिने, प्रमाण बुझ्ने, सक्कल नागरिकता प्रमाणपत्र खिच्ने, म्याद तामेल गर्ने, तारेखमा राख्ने वा हाजिर जमानीमा राख्ने समेतका अनुसन्धानको लागि प्रयोग गरिने विधिहरूको प्रयोग गर्ने सम्बन्धमा प्रचलित नेपाल कानूनमा भएको व्यवस्थालाई अवलम्वन गर्नु पर्छ।

८. अनुसन्धान कारबाहीलाई जतिसक्दो छिटो किनारा लगाउनु पर्छ।

९. अनुसन्धानबाट कसैलाई नेपाली नागरिकताबाट हटाउनु पर्ने भए हटाउनु पर्ने स्पष्ट आधार र कारणहरू सहितको सबै व्यहोरा उल्लेख गरी अनुसन्धानको सक्कल मिसिल नेपाल सरकार, गृह मन्त्रालयमा पठाउनु पर्छ।

१०. अनुसन्धानबाट कसैलाई नेपाली नागरिकताबाट हटाउनु नपर्ने देखिएमा सोही व्यहोरा खोली अनुसन्धान कारबाही तामेली गर्नु पर्नेछ र सोको जानकारी नेपाल सरकार, गृह मन्त्रालयमा पठाउनु पर्छ ।

११. अनुसन्धान गर्ने निकायले गरेको सिफारिस तथा अनुसन्धानको सक्कल मिसिल अध्ययन गरी केही कुरा थप स्पष्ट हुनु पर्ने देखिएमा सो समेत स्पष्ट गराई नेपाल सरकारले पर्चा खडा गरी झुट्टा विवरण पेश गरी लिएको नागरिकता प्रमाणपत्र रद्द गरी त्यस्तो नागरिकता प्रमाणपत्र लिने व्यक्तिलाई नेपाली नागरिकताबाट हटाउने छ ।

१२. नेपाल सरकारबाट निर्णय भइसकेपछि सक्कल निर्णय पर्चा सहितको सक्कल मिसिल गृह मन्त्रालयले सम्बन्धित जिल्ला प्रशासन कार्यालयमा पठाउनु पर्छ ।

१३. निर्णय पर्चासहितको सक्कल मिसिल जिल्ला प्रशासन कार्यालयमा प्राप्त भइसकेपछि जिल्ला प्रशासन कार्यालयले नागरिकताबाट हटाइएको व्यक्तिलाई निर्णयको जानकारी दिनु पर्छ ।

१४. जिल्ला प्रशासन कार्यालयले मुद्दा दायर गर्ने प्रयोजनको लागि मिसिल जिल्ला प्रहरी कार्यालयमा पठाउनु पर्छ ।

१५. सक्कल मिसिल पठाउँदा प्रतिलिपि प्रमाणित गरी नक्कल मिसिल राख्नु पर्छ ।

१६. नेपाल सरकारको निर्णयउपर पुनरावेदन परी पुनरावेदन अदालतले मिसिल मागे सक्कल मिसिल पठाई नक्कल मिसिल पुनरावेदन सरकारी वकिल कार्यालयमा सँगसँगै पठाई वहस पैरवीको लागि अनुरोध गर्नु पर्छ ।

१७. कानून बमोजिम सक्कल मिसिल जुनसुकै निकायमा पुगेपनि एकप्रति प्रमाणित नक्कल मिसिल जिल्ला प्रशासन कार्यालयमा राखिरहनु पर्छ ।

१८. सम्बन्धित जिल्ला प्रशासन कार्यालयले नागरिकताबाट हटाइएका व्यक्तिको अभिलेख अद्यावधिक गरी राख्नु पर्छ ।

१९. गृह मन्त्रालयले नेपाली नागरिकताबाट हटाइएका व्यक्तिहरूको नामावली प्रत्येक वर्ष नेपाल राजपत्रमा प्रकाशन गर्नु पर्नेछ ।

## परिच्छेद-८

## विवरण सच्याउनेसम्बन्धी व्यवस्था

### (३७) विवरण सच्याउनेसम्बन्धी ऐनमा भएको व्यवस्थाः

१. कुनै व्यक्तिले आफ्नो नेपाली नागरिकताको प्रमाणपत्रमा रहेको नाम, थर, उमेर, वतन वा अन्य विवरणमा त्रुटी भई सच्याउन चाहेमा भएको व्यहोरा खुलाई तोकिएको अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ ।

२. उपदफा (१) बमोजिम निवेदन परेपछि सम्बन्धित अधिकारीले निजसँग भएको सबुद प्रमाण र आवश्यकता अनुसार साक्षी सर्जमिन समेत बुझी त्यस्तो विवरण सच्याई पहिले लिएको नागरिकताको प्रमाणपत्र खिची अर्को नागरिकताको प्रमाणपत्र दिनसक्नेछ ।

३. विवाह वा सम्बन्ध विच्छेद भएकी महिलाले थर, वतन वा अन्य विवरण संशोधन गर्न निवेदन दिएमा तोकिएको अधिकारीले आवश्यक कुरा बुझी पहिले लिएको नागरिकताको प्रमाणपत्र खिची थर, वतन वा विवरण संशोधन गरी अर्को नागरिकताको प्रमाणपत्र दिनसक्नेछ ।

(ऐनको दफा १७ को उपदफा (१), (२) र (३))

### (३८) विवरण सच्याउनेसम्बन्धी नियमावलीमा भएको व्यवस्थाः

१. ऐनको दफा १७ को उपदफा (१) र (३) बमोजिम नेपाली नागरिकताको प्रमाणपत्रको विवरणमा उल्लिखित कुनै कुरा सच्याउन चाहने व्यक्तिले मन्त्रालय वा प्रमुख जिल्ला अधिकारीसमक्ष निवेदन दिनु पर्नेछ ।

२. उपनियम (१) बमोजिम विवरण सच्याउन वा संशोधन गर्न निवेदन दिएमा मन्त्रालय वा प्रमुख जिल्ला अधिकारीले ऐनको दफा १७ को उपदफा (२) बमोजिम आवश्यक कुरा बुझी पहिले लिएको नागरिकताको प्रमाणपत्र खिची संशोधन सहित अर्को नागरिकताको प्रमाणपत्र दिनसक्नेछ ।

(नियमावलीको नियम १४ को उपनियम (१) र (२))

### (३९) विवरण सच्याउनेसम्बन्धी कार्यविधि :

नेपाली नागरिकताको प्रमाणपत्र प्राप्त गरेको व्यक्तिले प्रमाणपत्रको विवरणमा उल्लिखित कुराहरू सच्याउन चाहेमा देहाय बमोजिम गर्नु पर्छ :-

१. विवरण सच्याउनु पर्नाको मनासिब कारण उल्लेख गरी निवेदन दिनु पर्नेछ ।

२. निवेदन साथ सच्याउनु पर्ने कारण खुलेको प्रमाण संलग्न हुनु पर्नेछ । यसरी प्रमाण संलग्न गर्दा तथ्य प्रमाणित गर्ने सार्थक आधारहरु देहाय बमोजिम हुनु पर्नेछ :-

उमेरको हकमा :- शैक्षिक योग्यताको प्रमाणपत्रमा उल्लिखित मिति,

शैक्षिक योग्यताको प्रमाणपत्र नभएको विदेशी सेनामा कार्यरत वा निवृत्त व्यक्तिको हकमा नोकरीको अभिलेख वा पेन्सनपट्टामा उल्लेख भएको मिति ।

वतनको हकमा :- बसाइसराइको प्रमाणपत्र,

स्थानीय निकायले कारण खुलाई गरिदिएको प्रमाणित कागज ।

नामथरको हकमा :- शैक्षिक योग्यताको प्रमाणपत्र,

बाबु, आमा वा तीन पुस्ताभित्रको व्यक्तिको सनाखत,

शैक्षिक संस्थाको फोटो सहितको प्रमाणित पत्र ।

३. कुनै महिलाले पुनः विवाह वा सम्बन्ध विच्छेद गरी नागरिकतामा उल्लिखित पतिको नामथर जस्ता कुरा फरक परेमा पुनः विवाह गरेको प्रमाण वा सम्बन्ध विच्छेदको प्रमाणपत्र संलग्न गराउनु पर्छ ।

४. निवेदनको व्यहोरा ठीक साँचो भई व्यक्तिलाई मर्का परेको भए प्रमुख जिल्ला अधिकारीले निर्णय गरी पहिले लिएको नागरिकता प्रमाणपत्र खिची अभिलेखमा संशोधित विवरण जनाई नयाँ नागरिकता जारी गर्नु पर्दछ ।

## परिच्छेद-९

## नागरिकताको प्रमाणपत्रको प्रतिलिपि जारी गर्दा अपनाउनु पर्ने कार्यविधिः

### (४०) प्रतिलिपि जारी गर्दा अपनाउनु पर्ने कार्यविधि :

पहिले लिएको नेपाली नागरिकताको प्रमाणपत्र कुनै कारणवश फाटी, च्यातिई, आगलागी भई हराएमा, पानीले भिजी नष्ट भएमा वा अन्य कुनै कारणले झुत्रो भई काम नलाग्ने भएमा नागरिकताको प्रमाणपत्र प्राप्त व्यक्तिले पहिले लिएको नागरिकताको प्रतिलिपि माग गर्न सक्नेछ । प्रतिलिपि माग गरेको अवस्थामा देहाय बमोजिमको कार्यविधि अपनाई नागरिकताको प्रमाणपत्रको प्रतिलिपि जारी गर्नु पर्नेछ ।

१. पहिले जारी भएको नागरिकता प्रमाणपत्रको च्यातिएको वा फाटेको वा सक्कल नभई छाँयाप्रति राखी प्रतिलिपि माग गरी निवेदन दिन आएमा कार्यालयको अभिलेख भिडाई प्रतिलिपि दिनुपर्छ ।

२. पहिले जारी भएको नागरिकता प्रमाणपत्रको छाँयाप्रति राख्न नसकी सम्बन्धित व्यक्तिको फोटो टाँसी निवेदन पर्न आएमा पहिले जारी भएको अनुसूची र कार्यालयप्रति सुरक्षित भएको अवस्थामा कार्यालयको अभिलेख भिडाई प्रतिलिपि दिनुपर्छ ।

३. कार्यालयको अभिलेखसँग निवेदकको नागरिकताको प्रमाणपत्रको छाँयाप्रति भिडेमा वा फोटो टाँसी आएको निवेदनको फोटो र कार्यालयको अभिलेखको फोटो मिलेको अवस्थामा प्रतिलिपि दिँदा कुनै निकायको सिफारिस नभए पनि प्रतिलिपि जारी गर्न वाधा पर्दैन ।

४. पहिले जारी भएको नागरिकता प्रमाणपत्रको अनुसूची नभएको तर कार्यालय प्रति भएको वा अनुसूची भएको तर कार्यालय प्रति नभएको वा अनुसूची र कार्यालय प्रति दुबै नभई रजिष्टरमा नाम मात्र भएको अवस्थामा प्रतिलिपि दिनु पर्दा स्थानीय निकायबाट फोटोसमेत प्रमाणित गरी सिफारिस भै आएको अवस्थामा व्यक्ति यकिन गरेर पछि कार्यालय प्रति फेला परेको समयमा तदनुरूप हुने गरी हाल रजिष्टरलाई आधार मानी कार्यालय प्रति तयार गरी प्रतिलिपि जारी गर्नुपर्छ ।

५. पहिले मजिष्ट्रेट, बडाहाकिम, अञ्चलाधीश कार्यालय, विशेष अधिकृत, प्र.जि.अ. को कार्यालय, जिल्ला कार्यालय तथा जिल्ला प्रशासन कार्यालयहरूबाट प्रदान गरिएको नागरिकता प्रमाणपत्रहरूको कार्यालयप्रति फेला नपरेको र त्यस्तो नागरिकतामा नागरिकता वितरण टोलीबाट दरपीट समेत नभएको अवस्थामा पहिले लिएको नागरिकता प्रमाणपत्र भए सो प्रमाणपत्र समेत खिची नागरिकता प्रमाणपत्र नलिएको व्यक्तिलाई नागरिकता प्रमाणपत्र दिँदा अपनाउनु पर्ने सम्पूर्ण कार्यविधि पूरा गरी नयाँ नागरिकता प्रमाणपत्र दिई अभिलेखमा पुरानो नागरिकता प्रमाणपत्रको कार्यालय प्रति फेला नपरेको व्यहोरा जनाई अधिकृतबाट प्रमाणित गराउनु पर्छ ।

६. साविक जिल्लाबाट नागरिकता प्रमाणपत्र लिई हाल अन्य जिल्लामा बसाइँ सरी जाने तथा विवाह गरी जाने नेपाली नागरिकले बसाइँ सराइको तथा विवाहको प्रमाण राखी हाल स्थायी बसोबास भएको जिल्ला प्रशासन कार्यालयमा नागरिकताको प्रमाणपत्रको प्रतिलिपि माग गरेमा सो कार्यालयले साविक जिल्लाको जिल्ला प्रशासन कार्यालयबाट निजको नागरिकतासम्बन्धी प्रामाणिक अभिलेख मगाई सोको आधारमा प्रतिलिपि दिई साविक कार्यालयलाई जनाउ दिनुपर्छ ।

७. यस्तै प्रक्रिया पूरा गरी कर्मचारी र कर्मचारीका परिवारले समेत आफू कार्यरत रहेको जिल्लाको जिल्ला प्रशासन कार्यालयबाट प्रतिलिपि प्राप्त गर्न सक्नेछन् । तर कर्मचारी तथा तिनका परिवारले प्रतिलिपि माग गर्दा कर्मचारी कार्यरत रहेको कार्यालयको सिफारिस पेश गर्न लगाउनु पर्छ ।

८. नागरिकता प्रमाणपत्रको प्रतिलिपि वितरणको छुट्टै रजिष्टर खडा गरी अधिकृतबाट व्यहोरा प्रमाणित गराउनु पर्छ ।

९. नक्कल दस्तुर वापतको रु.३।- को टिकट निवेदनमा वा सिफारिसपत्रको पीठमा टाँसी व्यहोरा जनाई टिकट रद्द गर्नुपर्छ ।

१०. नागरिकताको प्रमाणपत्रको प्रतिलिपि तयार गर्दा कार्यालयमा रहेको अभिलेख अनुरूपको सबै व्यहोरा कार्डमा स्पष्ट बुझिने गरी कालो मसीले लेख्नु पर्छ र खाली रहने महलमा अरू व्यहोरा लेख्न नमिल्ने गरी धर्सो तान्नु पर्छ ।

११. नागरिकता कार्डमा सबै व्यहोरा लेखिसकेपछि सम्बन्धित व्यक्तिको फोटो टाँसी सहीछाप र हस्ताक्षर गराएपछि अधिकृतबाट नागरिकताको प्रमाणपत्रको प्रतिलिपिमा दस्तखत गराई कार्यालय तथा अधिकृतको छाप लगाएर सम्बन्धित व्यक्तिलाई भर्पाइ गराई नागरिकताको प्रतिलिपि दिनुपर्छ ।

१२. पहिले अभिलेखमा टाँसेको फोटो चिन्न नसकिने भई व्यक्ति पहिचानमा कठिन हुने र त्यस्तो अवस्थामा अर्काको नाउँबाट अरूले प्रतिलिपि लिनसक्ने सम्भावना रहेकोले फोटो च्यातिएको, स्पष्ट नभएको अवस्थामा स्थानीय निकायबाट फोटो प्रमाणितसहित सिफारिस लिई पुनः प्रतिलिपि जारी गर्नु पर्छ । प्रतिलिपिमा दस्तखत गर्ने अधिकृतले दस्तखत गर्ने समयमा कार्यालयको अभिलेख अनुरूपको व्यहोरा भिडे नभिडेको राम्ररी जाँच गर्नुपर्छ ।

१३. नागरिकता प्रमाणपत्रको प्रतिलिपि जारी गर्दा कति पटक प्रतिलिपि लिएको भन्ने कुरा नागरिकता कार्डको पछाडिपट्टि माथिल्लो भागमा र कार्यालयको अभिलेखमा जनाउनु पर्छ ।

जस्तोः- पहिलो पटक प्रतिलिपि दिँदा - प्रथम प्रतिलिपि

दोस्रो पटक प्रतिलिपि दिँदा - द्वितीय प्रतिलिपि

१४. सम्बन्धित व्यक्तिको मृत्यु भैसकेको अवस्थामा अरू सरोकारवाला व्यक्तिले नागरिकता प्रमाणपत्रको प्रतिलिपि माग गर्न आएमा कार्डमा प्रतिलिपि नदिई अन्य पत्रमा यो यस्तो व्यक्तिले यो मितिमा नागरिकताको प्रमाणपत्र लिएको देखिन्छ भनी कार्यालयप्रति अनुसारको सबै व्यहोरा खुलाई प्रमाणित गरिदिनु पर्छ ।

१५. अङ्गीकृत नागरिकता प्रमाणपत्रको प्रतिलिपि जारी गर्दा माथि उल्लिखित आवश्यक कार्यविधिका अतिरिक्त निम्नबमोजिमका थप अन्य कार्यविधि समेत अपनाउनु पर्छ :-

१. सम्बन्धित जिल्ला प्रशासन कार्यालयमा रहेको अङ्गीकृत नागरिकताको अभिलेखका आधारमा सम्बन्धित व्यक्ति यकिन गरी प्र.जि.अ.को निर्णयले अङ्गीकृत नागरिकता प्रमाणपत्रको प्रतिलिपि दिनुपर्छ ।

२. जिल्लामा अभिलेख नभएको खण्डमा गृह मन्त्रालयमा रहेको अभिलेख भिडाउन लेखी पठाई मन्त्रालयबाट प्राप्त अभिलेख अनुरूपको प्रतिलिपि दिनुपर्छ ।

३. अङ्गीकृत नागरिकता प्रमाणपत्रको प्रतिलिपि दिएपछि त्यसको मास्केबारी गृह मन्त्रालय र सम्बन्धित क्षेत्रीय प्रशासन कार्यालयमा पठाउनु पर्छ ।

## परिच्छेद-१०

## नागरिकताको प्रमाणपत्रको अभिलेख राख्नेसम्बन्धी व्यवस्था

(४१) **नागरिकताको प्रमाणपत्रको अभिलेख राख्नेसम्बन्धी ऐनमा भएको व्यवस्था :**

नेपाली नागरिकताको प्रमाणपत्रको अभिलेख राख्नेसम्बन्धी व्यवस्था तोकिएबमोजिम हुनेछ ।

(ऐनको दफा १५)

(४२) **नागरिकताको प्रमाणपत्रको अभिलेख राख्नेसम्बन्धी नियमावलीमा भएको व्यवस्था :**

ऐनको दफा १५ बमोजिम नागरिकताको प्रमाणपत्रको अभिलेख देहायबमोजिम राखिनेछ :-

(क) नागरिकतासम्बन्धी विवरणलाई व्यवस्थित रूपमा अभिलेखीकरण गरी राख्नु पर्नेछ र यो विवरण विद्युतीय माध्यममा समेत राख्न सकिनेछ ।

(ख) जिल्ला प्रशासन कार्यालयहरूले नागरिकता प्रमाणपत्र वितरणको मासिक विवरण क्षेत्रीय प्रशासन कार्यालय र मन्त्रालयमा पठाउनु पर्नेछ ।

(नियमावलीको नियम १३)

(४३) **नागरिकताको अभिलेख राख्नेसम्बन्धी कार्यविधि :**

### १. अनुसूची फाराम व्यवस्थापन

१. नागरिकता प्रमाणपत्र प्राप्तिका लागि पेश भएका अनुसूची फारामहरू नेपाली कागजको बनाउनु पर्छ । अनुसूची फाराममा नउड्ने कालो मसीले लेख्नु पर्दछ ।

२. अनुसूची फारामको पछाडिपट्टि नागरिकता प्राप्त गर्न पेश गरिएका सबै प्रमाणहरू उल्लेख गरी सक्कल प्रति संग रुजु गरी रुजु गर्ने कर्मचारीले हस्ताक्षर गर्नु पर्दछ ।

३. नागरिकताका लागि पेश गरेका अनुसूची फारामहरू र अन्य प्रमाणहरू सिलसिलेबार नम्बर मिलाई फाइलमा राख्नु पर्छ । सिलसिलेबार नम्बर दिँदा रजिष्टरमा लेखिएको नागरिकता नम्बरको आधारमा अनुसूचीको बाहिर नम्बर लेखी फाइलिङ्ग गर्नु पर्छ । एउटा फाइलमा १०० सम्म निवेदन फाइलिङ्ग गरी फाइलको बाहिर १ देखि क्रमशः १०० नम्बर उल्लेख गर्नु पर्छ ।

### २. रजिष्टर व्यवस्थापन

१. नागरिकता प्रमाणपत्रको कार्यालयप्रतिको अभिलेख रजिष्टर सुरक्षित राख्न नेपाली कागजको बनाउनु पर्दछ ।

२. अभिलेख नच्यातिने गरी सुरक्षित ढंगबाट राख्नुपर्छ ।

३. अभिलेखका विभिन्न महलहरूमा तोकिए बमोजिमको पूरा विवरण उल्लेख गर्नुपर्छ ।

४. नागरिकताको अभिलेखमा विवरण लेख्दा नउड्ने कालो मसीले लेख्नु पर्छ ।

५. विवरण प्रमाणित गर्ने अधिकारीले प्रष्ट बुझिने गरी पूरा दस्तखत गरी प्रमाणित गर्नुपर्छ ।

६. नागरिकता वितरण रजिष्टरको प्रत्येक पानाको शिर र पुछारमा अनिवार्य रूपमा दस्तखत गरी प्रमाणित गर्नु पर्नेछ । केरमेट भएको ठाउँमा पनि अधिकार प्राप्त अधिकारीले दस्तखत गर्नु पर्नेछ ।

७. नागरिकताको अभिलेख नागरिकताको किसिम र गा.वि.स. वा नगरपालिका अनुसार छुट्टा छुट्टै खडा गर्नु पर्नेछ ।

८. नागरिकतासम्बन्धी रजिष्टर र फाइलहरू व्यवस्थित गर्न प्रत्येक रजिष्टरको बाहिर गाउँ विकास समिति/नयाँ कोड नम्बर र रजिष्टर नम्बर लेख्नु पर्छ । (जस्तै ताप्लेजुङ्ग ०१- र रजिष्टर नम्बर १ हुँदा ०११ हुन्छ) त्यसरी रजिष्टर नम्बरको तेरिज छुट्टै कागजमा-१ (रजिष्टर नम्बर) प्रमाणित गरी राख्नु पर्छ ।

९. फाटेका वा च्यातिएका टुक्रालाई सम्बन्धित पानामा पुनः राम्ररी टाँसी सुरक्षित राख्नुपर्छ ।

१०. नागरिकता जारी गर्ने अधिकारीले फाटेका, च्यातिएका वा फाट्न लागेका कागजातहरू देख्नासाथ सम्बन्धित कर्मचारीलाई ती कागजातहरू व्यवस्थित गर्न लगाउनु पर्छ र यो व्यवस्थित गर्ने जिम्मेवारी सम्बन्धित कर्मचारीको हुनेछ ।

## ३. <u>नागरिकता कार्ड व्यवस्थापन</u>

११. नागरिकता प्रमाणपत्रको कार्डमा कालोमसीले स्पष्ट बुझिने गरी केरमेट नगरीकन लेख्नु पर्ने विवरण लेखी खाली रहने महलमा लेख्न नमिल्ने गरी धर्को तान्नु पर्छ ।

१२. नागरिकता कार्डमा दस्तखत गर्ने अधिकारीको नाम थर, दर्जा र नागरिकता प्रमाणपत्र जारी मिति स्पष्टसँग उल्लेख गर्नु पर्छ ।

१३. जसको नागरिकता कार्ड हो त्यसमा सम्बन्धित व्यक्तिको सहीछाप र हस्ताक्षरसमेत गराउनु पर्छ । लेख्न नजान्नेको हकमा औंठाको सहिछाप मात्र गराए पुग्छ ।

## ४. <u>सुरक्षा चिन्ह</u>

१४. सुरक्षा चिन्ह (Hologram) सुरक्षित रूपमा राख्नुपर्छ ।

१५. नागरिकता कार्डमा टाँस्ने गरिएको सुरक्षा चिन्ह (Hologram) फोटो र कार्ड दुबै ठाउँमा पर्ने गरी टाँस्नुपर्छ ।

## ५. <u>नागरिकता नम्बर राख्ने सम्बन्धी व्यवस्था :</u>

१६. नागरिकताको प्रमाणपत्रमा छुट्टाछुट्टै नागरिकता नम्बर राख्नु पर्नेछ ।

१७. नागरिकताको प्रमाणपत्रमा कोड नम्बर दिइनेछ । जुन देहाय बमोजिम हुनेछ :-

(क) जिल्लाको कोड नम्बर दुई अंकमा हुनेछ (जुन यसै निर्देशिकाको परिच्छेद-१५ मा दिइएको छ) ।

(ख) नागरिकता प्रमाणपत्र जारी गर्ने कार्यालयको निम्न कोड हुनेछ :-

१. जिल्ला प्रशासन कार्यालयको कोड नम्बर - १

२. इलाका/सीमा प्रशासन कार्यालयको कोड नम्बर-२

३. टोलीको कोड नम्बर - ३

(ग) गाउँ विकास समिति र नगरपालिकाको कोड नम्बर तीन अंकको हुनेछ ।

१८. नागरिकताको प्रमाणपत्रमा नम्बर राख्दा जिल्ला, नागरिकता जारी गर्ने कार्यालय र गाउँ विकास समिति तथा नगरपालिकाको कोड लेख्नु पर्नेछ । सोको मुनि धर्सो तानी नागरिकता नम्बर लेखी नागरिकताको प्रमाणपत्र जारी गर्नु पर्नेछ । उदाहरणको रूपमा खोटाङ्ग जिल्लाको कोड नम्बर १२ राखाबाङ्गदेल गा.वि.स.को कोड नम्बर ०१५ हुँदा पहिलो नागरिकता नम्बर यस प्रकार हुनेछ :-

(क) जिल्ला प्रशासन कार्यालयबाट जारी गर्दा : १२१०१५ मुनि १ हुन्छ । जस्तै : १२१०१५

१

(ख) इलाका/सीमा प्रशासन कार्यालयबाट जारी गर्दा : १२२०१५ मुनि १ हुन्छ । जस्तै : १२२०१५

१

(ग) टोलीबाट जारी गर्दा : १२३०१५ मुनि १ हुन्छ । जस्तै : १२३०१५

१

१९. प्रमुख जिल्ला अधिकारीले आफ्नो जिल्ला भित्रका प्रत्येक गाउँ विकास समिति र नगरपालिकको लागि कोड नम्बर दिनु पर्नेछ । त्यसरी कोड नम्बर दिँदा ००१ अंकबाट शुरु गर्नु पर्नेछ ।

२०. त्यसरी दिइएको कोड नम्बरको एक प्रति रजिष्टरमा प्रमाणित गरी जिल्ला प्रशासन कार्यालयमा राखी सोको विवरण क्षेत्रीय प्रशासन कार्यालय र गृह मन्त्रालय नागरिकता वितरण अभियान कार्य सञ्चालन केन्द्रीय इकाइमा तत्काल पठाउनु पर्नेछ ।

२१. गाउँ विकास समिति र नगरपालिका पिच्छे अलग अलग नागरिकता नम्बर शुरु हुनेछ र १ बाट क्रमशः बढ्दै जानेछ ।

## ६. अभिलेखको सुरक्षा :

२२. नागरिकतासम्बन्धी अभिलेखहरू राखिएको ठाउँमा सम्बन्धित कर्मचारी बाहेकका अन्य असम्बन्धित व्यक्तिको प्रवेश निषेध गर्नुपर्छ ।

२३. नागरिकतासम्बन्धी अभिलेखहरू सम्बन्धित कर्मचारी बाहेकका अन्य व्यक्तिलाई छुन चलाउन दिनुहुँदैन ।

२४. अभिलेख व्यवस्थापनसम्बन्धी काम प्रत्यक्ष रूपमा सम्बन्धित कर्मचारीको हुनेछ । यस काममा संलग्न रहने कर्मचारीको जिम्मेवारी स्पष्ट किटान गर्नु पर्नेछ ।

## परिच्छेद-११

## अनुसूची फाराममा सिफारिस गर्नेसम्बन्धी व्यवस्था

(४४) **सिफारिस गर्ने सम्बन्धी व्यवस्था :**

१. नेपालको कुनै नागरिकले वंशजको नाताले वा जन्मको आधारमा नेपाली नागरिकताको प्रमाणपत्र लिन चाहेमा सम्बन्धित गा.वि.स. वा नगरपालिकाले तोकेको पदाधिकारीको सिफारिस साथ सम्बन्धित प्रमुख जिल्ला अधिकारीसमक्ष अनुसूची-१ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ ।

२. नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएकी विदेशी महिलाले र अङ्गीकृत नागरिकता प्राप्त गरेको व्यक्तिको सन्तानमध्ये निजले सो नागरिकता प्राप्त गर्नु भन्दा पहिले जन्मेका सन्तानले नेपालको नागरिकता प्राप्त गर्न चाहेमा आफू बसोबास गरी आएको गाउँ विकास समिति वा नगरपालिकाले तोकेको पदाधिकारीको सिफारिससाथ प्रमुख जिल्ला अधिकारीसमक्ष अनुसूची-७ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ ।

३. कुनै विदेशी नागरिकले नेपालको नागरिकताप्राप्त गर्न चाहेमा आफू बसोबास गरी आएको गाउँ विकास समिति वा नगरपालिकाले तोकेको पदाधिकारीको सिफारिस साथ प्रमुख जिल्ला अधिकारीमार्फत नेपाल सरकार, गृह मन्त्रालयसमक्ष अनुसूची-७ बमोजिमको ढाँचामा निवेदन दिनु पर्नेछ ।

४. ऐनको दफा ८ को उपदफा (४) बमोजिम नागरिकताको प्रमाणपत्र लिन चाहने व्यक्तिको अनुसूची-१ बमोजिमको ढाँचामा सिफारिस गर्दा सिफारिसकर्ताले सिफारिसका आधारहरु खोल्नसक्नेछ ।

## परिच्छेद-१२

## नागरिकता टोलीको गठन

(४५) **टोलीको गठन**

नेपाल सरकारले आवश्यक देखेमा नागरिकताको प्रमाणपत्र वितरण गर्नका लागि नागरिकता प्रमाणपत्र वितरण टोली खटाउनसक्नेछ ।

(ऐनको दफा २२)

नेपाली नागरिकलाई सहज र सरल ढंगले नागरिकताको प्रमाणपत्र वितरणको लागि नेपाल सरकारले नागरिकता वितरण टोली खटाउनसक्ने व्यवस्था नेपाल नागरिकता ऐन, २०६३ र नेपाल नागरिकता नियमावली, २०६३ मा गरिएको छ । सो बमोजिम खटिएको टोलीले ऐन, नियम र निर्देशिकामा व्यवस्था भएका आधार एवम् प्रकृयाहरु पूरा गरी अधिकार प्रत्यायोजनका अधीनमा रही नेपाली नागरिकताको प्रमाणपत्र जारी गर्न सक्ने व्यवस्था गरिएको छ ।

(क) टोलीमा खटिने कर्मचारी निजामती सेवाका हुनेछन् । टोली प्रमुखमा निजामती सेवाका अधिकृत स्तरको कर्मचारी खटाइनेछ ।

(ख) टोलीमा खटिने कर्मचारीले तोकिए बमोजिमको सुविधा पाउने छन् ।

(४६) **नागरिकता टोलीको काम**

नागरिकता ऐन, नियम, निर्देशिका र अधिकार प्रत्यायोजनको अधीनमा रही नागरिकता वितरण टोलीको काम देहाय बमोजिम तोकिएको छ :-

१. वंशजको नाताले नागरिकताको प्रमाणपत्र जारी गर्ने र सोसम्बन्धी कार्यविधि यसै निर्देशिकाको परिच्छेद-२ मा उल्लेख गरिएको छ ।

२. जन्मको आधारमा नागरिकताको प्रमाणपत्र जारी गर्ने र सो सम्बन्धी कार्यविधि यसै निर्देशिकाको परिच्छेद-३ मा उल्लेख गरिएको छ ।

३. १६ वर्ष भन्दामुनिका नेपाली नागरिकका नाबालक सन्तानहरूको अभिलेख खडा गर्ने । नाबालकको अभिलेख तोकिएको ढाँचामा राख्नु पर्नेछ ।

४. १६ वर्ष भन्दा माथिका नागरिकताको प्रमाणपत्र लिन छुट भएका साबालक नेपाली नागरिकको लगत तोकिएको ढाँचामा राख्नु पर्नेछ ।

(४७) **टोलीले गर्नु पर्ने पूर्व तयारी**

१. टोलीमा खटिने कर्मचारी तथा टोली प्रमुखले नागरिकताको प्रमाणपत्र वितरण सम्बन्धी ऐन, नियम र कार्यविधिको बारेका स्पष्ट हुने । कुनै द्विविधा वा अस्पष्टता भएमा प्रमुख जिल्ला अधिकारीसँग छलफल गरी स्पष्ट हुने ।

२. नागरिकताको प्रमाणपत्र वितरणका सम्बन्धमा हाल प्रचलनमा रहेका कुराहरू, कार्यविधि, फाराम, रजिष्टर, नागरिकताको कार्ड, होलोग्राम आदिका सम्बन्धमा स्पष्ट जानकारी राख्ने र कुनै विवरण वा कुनै कुराका सम्बन्धमा अस्पष्ट भएमा वा कुनै जिज्ञासा भएमा नागरिकता फाँटमा कार्यरत कर्मचारी, सहायक प्रमुख जिल्ला अधिकारी र प्रमुख जिल्ला अधिकारीसंग विस्तृत छलफल गरी स्पष्ट हुने ।

३. ऐन, नियम, कार्यविधि र कार्य प्रक्रियाका सम्बन्धमा स्पष्ट भएपछि नागरिकता टोलीले आवश्यक रजिष्टर, अनुसूची फाराम, नागरिकताको कार्ड, होलोग्राम लगायतका अन्य आवश्यक सामग्रीहरू सूची बमोजिम भए नभएको जाँच गरी जिल्ला प्रशासन कार्यालयबाट बुझ्ने ।

४. सम्बन्धित गाउँ विकास समिति र नगरपालिकामा रहेका राजनैतिक दल र नागरिक समाजका मुख्य व्यक्तिहरूसँग नागरिकता वितरण प्रक्रियाका सम्बन्धमा छलफल गरी जानकारी दिने ।

५. तोकिएका गाउँ विकास समिति र नगरपालिकालाई नागरिकता वितरण सम्बन्धी कार्यक्रमको सूचना अग्रिम रूपमा दिने ।

६. नागरिकता वितरण सम्बन्धी जानकारी गराउन स्थानीय एफ.एम., पत्रपत्रिका, केबुल नेटवर्क, टि.भी., स्लाइड आदि संचारका माध्यमबाट समाचारको रूपमा प्रचार प्रसार गराउने ।

७. गाउँ वा नगरमा रहेका शिक्षक, सरकारी कर्मचारी, गैर सरकारी संस्थासँग नागरिकता वितरणसम्बन्धी अन्तरक्रिया गरी सहयोगी (Conducive) वातावरण बनाउने ।

(४८) **<u>टोली प्रमुखको कर्तव्य र अधिकार</u>**

१. जिल्लाबाट खटिई जाने नागरिकता वितरण टोलीले गाउँ विकास समिति/नगरपालिकामा पुगेपछि नागरिकता वितरणको काम थाल्नु भन्दा अगाडि राजनैतिक दलहरू, नागरिक समाजका प्रवुद्धवर्ग र स्थानीय बुद्धिजिवीहरूसँग नागरिकता वितरण प्रक्रियाबारे अन्तर्क्रिया गरी कार्य प्रक्रियाको जानकारी गराउने र सहयोगी वातावरण निर्माण गर्ने ।

२. गाउँ विकास समिति र नगरपालिकाको कुन स्थानमा मुकाम राख्ने हो सोको निर्णय टोली प्रमुख स्वयंले गर्नु पर्नेछ ।

३. घना बस्ती भएको गाउँ विकास समिति वा नगरपालिकाको सदरमुकाम वा बहुसंख्यक जनतालाई पायक पर्ने स्थानको सरकारी कार्यालय, सामुदायिक भवन, विद्यालय वा अन्य सार्वजनिक भवनमा टोलीले मुकाम गर्नेछ । सो नभएमा अन्य वैकल्पिक व्यवस्था मिलाउने ।

**<u>अनुगमनको व्यवस्था</u>**

नागरिकताको प्रमाणपत्र वितरणको कामको अनुगमन

- टोलीको कामको अनुगमन जिल्ला प्रशासन कार्यालय ।
- जिल्लाको कामको अनुगमन क्षेत्रीय प्रशासन कार्यालय ।
- क्षेत्रीय रूपमा कामको अनुगमन गृह मन्त्रालय ।

४. नागरिकताको प्रमाणपत्र वितरणका लागि आवश्यक पर्ने फर्निचर र कार्यालयको व्यवस्था स्थानीय राजनैतिक दल, नागरिक समाज र स्थानीय निकायको सहयोग लिई मिलाउने ।

५. नागरिकताको प्रमाणपत्र वितरण गर्ने कार्यक्रमको जानकारी सम्बन्धित गाउँ विकास समिति/नगरपालिका र स्थानीय संचार माध्यमलाई उपलब्ध गराउनु पर्नेछ ।

६. टोली प्रमुखले आवश्यक परेमा स्थानीय निकायबाट सहयोग लिनसक्नेछ ।

७. एक गाउँ विकास समिति वा नगरपालिकाको मुकामबाट नजिक पर्ने अन्य गाउँ विकास समिति वा नगरपालिकाको गाउँ वा बस्ती नजिक परेको खण्डमा सो गाउँ विकास समितिको टोलीले नै वितरण कार्य गर्न सक्नेछ । तर यस सम्बन्धी व्यवस्था प्रमुख जिल्ला अधिकारीले तोकेबमोजिम हुनेछ ।

८. यस बाहेक स्थानीय आवश्यकता, सम्भावना र सुविधालाई ध्यानमा राखी टोली प्रमुखले वैकल्पिक वितरण मुकाम कायम गर्न सक्नेछ ।

९. नागरिकताको टोलीमा खटिने कर्मचारीले सेवा प्रदान गर्दा नरिसाई हँसिलो अनुहार (Smiling Face) मा काम गर्नु पर्छ र कसरी सजिलो ढंगमा काम गर्ने भन्ने विषयमा कर्मचारीसँग छलफल गर्नु पर्नेछ ।

१०. नागरिकता वितरणको कामलाई प्रभावकारी रूपमा सञ्चालन गर्न टोलीमा खटिएका सबै कर्मचारीलाई जिम्मेवारी स्पष्ट रुपमा तोकी दिनु पर्नेछ ।

११. नागरिकताको प्रमाणपत्रका लागि निवेदन लिने र नागरिकता वितरण गर्ने समय तोकी कार्य सञ्चालन गर्ने ।

१२. नागरिकताको प्रमाणपत्र वितरणको कार्यमा खटिएको टोलीले आफूलाई सुम्पिएको जिम्मेवारी पूरा गरेपछि सम्पूर्ण कागजात जिल्ला प्रशासन कार्यालयमा बुझाई भर्पाइ लिनु पर्नेछ ।

१३. नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गरेपछि टोलीले गरेको कामको कार्य सम्पन्न प्रतिवेदन जिल्ला प्रशासन कार्यालय, क्षेत्रीय प्रशासन कार्यालयलाई उपलब्ध गराउनु पर्नेछ ।

(४९) **प्रक्रिया र दण्ड सजाय सबैले देख्ने गरी टाँस्नु पर्ने**

१. नेपाली नागरिकले सजिलो तरिकाबाट नेपाली नागरिकताको प्रमाणपत्र पाउन भन्ने उद्देश्यले नागरिकता लिँदा पूरा गर्नु पर्ने प्रक्रिया सबैले देख्ने स्थानमा टोलीले टाँस्नु पर्नेछ । च्यातिएमा वा बिग्रेमा पुनः टास्नु पर्नेछ र यो काम टोलीले निरन्तर जारी राख्नु पर्नेछ ।

२. कसैले झुठो विवरण दिई वा गलत तरिकाले नागरिकताको प्रमाणपत्र लिन नसकोस् भन्ने उद्देश्यले बदनियत पूर्वक नागरिकता लिदाँ हुनसक्ने दण्ड सजायको विवरण नागरिकताको प्रमाणपत्र जारी गर्ने अधिकारीको कार्यालयमा सबैले देख्ने स्थानमा अनिवार्य रूपमा टाँस्नु पर्नेछ । च्यातिएमा वा बिग्रेमा पुनः टाँस्नु पर्नेछ र यो काम निरन्तर जारी राख्नु पर्नेछ ।

(५०) **विवरण पठाउने :**

१. नागरिकता टोलीबाट वितरण भएका नागरिकताको साप्ताहिक प्रगति विवरण जिल्ला प्रशासन कार्यालयमा पठाउनु पर्छ । (यस्तो विवरण पठाउने फारामको नमूना .......... पाना मा समावेश गरिएकोछ) ।

२. वितरण भएका, नासिए बिग्रिएका र मौज्दात रहेका कार्ड र सुरक्षा चिन्हको हिसाब स्पष्ट देखिने गरी दैनिक रुपमा राख्ने र सोको विवरण साप्ताहिक रूपमा जिल्ला प्रशासन कार्यालयमा पठाउनु पर्नेछ ।

३. बिग्रिएका कार्ड तथा सुरक्षा चिन्ह जिल्ला प्रशासन कार्यालयमा पठाउनु पर्नेछ ।

(५१) **सुरक्षा चिन्ह**

१. टोलीलाई प्राप्त सुरक्षा चिन्ह (Hologram) सुरक्षित रूपमा राख्नु पर्छ ।

२. सुरक्षा चिन्ह (Hologram) नागरिकता प्रमाणपत्रको फोटो र कार्ड दुबै ठाउँमा पर्ने गरी टाँस्नु पर्छ ।

(५२) **भौतिक सुविधा व्यवस्थापन**

नागरिकताको प्रमाणपत्र वितरण टोलीले अभिलेख सुरक्षित राख्न आवश्यक पर्ने भौतिक सुविधा जुटाउनेतर्फ गाउँ विकास समिति, नगरपालिका वा सरकारी कार्यालयसँग समन्वय गर्न सक्नेछ ।

**(५३) <u>दस्तखत नमूना</u>**

नागरिकता जारी गर्ने टोली प्रमुखको नाम थर, टोली नम्बरसहित उल्लेख गरी एक/एकप्रति दस्तखत नमूना जिल्ला प्रशासन कार्यालय, क्षेत्रीय प्रशासन कार्यालयमा पठाई एकप्रति कार्यालयको अभिलेखमा राख्नु पर्छ। दस्तखत कार्डको नमूना ......................मा समावेश गरिएको छ।

**(५४) <u>अन्य</u>**

१. पहिले आउनेको काम पहिले गरिदिनु पर्छ र अन्धा, अपाङ्ग, अशक्त र वृद्धवृद्धाहरूलाई पहिलो प्राथमिकता दिनु पर्छ।

२. प्रत्येक दिन नागरिकता प्रमाणपत्र पाउने व्यक्तिको नामावली सोहीदिन बेलुका प्रकाशित गर्नु पर्छ।

नागरिकता वितरण टोली

# कार्य सम्पादन चित्र (Work Flow Chart)



## परिच्छेद-१३

## नागरिकता वितरणमा जिम्मेवार निकाय र पदाधिकारीहरू

**(५५) क्षेत्रीय प्रशासकको जिम्मेवारी :**

१. आफनो क्षेत्रभित्रका सबै नेपाली नागरिकले सहज ढंगबाट नागरिकताको प्रमाणपत्र पाउने व्यवस्था क्षेत्रीय प्रशासकले मिलाउनु पर्नेछ । सो कामका लागि नेपाल सरकारले क्षेत्रीय प्रशासकलाई पूर्ण रूपमा जिम्मेवार बनाएको छ ।

२. क्षेत्रीय प्रशासकले आफ्नो क्षेत्रभित्र नागरिकता टोलीमा खटिने कर्मचारी नपुग हुने भएमा आफ्नो क्षेत्र भित्रका अर्को जिल्लाबाट खटाउनु पर्नेछ ।

३. नागरिताको प्रमाणपत्र वितरण गर्ने काममा कुनै जिल्लामा वा नागरिकता टोलीमा कठिनाइ उत्पन्न भएमा क्षेत्रीय प्रशासक स्वयंले नै अग्रसरता लिई समस्या समाधान गरिदिनु पर्नेछ ।

४. तोकिएको समयमभित्र नागरिकता टोलीबाट नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गराउनु पर्नेछ ।

५. नीतिगत कठिनाई परी समस्या समाधान हुन नसकेमा गृह मन्त्रालयबाट निकासा लिई गर्नु पर्नेछ ।

६. जिल्लामा खटिने नागरिकता टोलीको कामको आवश्यकता अनुसार निरीक्षण, रेखदेख र समन्वय गरी कार्यमा प्रभावकारिता ल्याउनु पर्नेछ ।

७. क्षेत्रीय प्रशासकले आफ्नो क्षेत्रभित्रका जिल्लामा वितरण भएको नागरिकताको जिल्लागत विवरण मासिक रूपमा गृह मन्त्रालय, नागरिकता शाखामा पठाउनु पर्छ । टोली खटेको समयमा साप्ताहिक रूपमा विवरण तयार गरी नागरिकता वितरण अभियान सञ्चालन केन्द्रीय इकाइमा पठाउनु पर्नेछ ।

८. नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गरेपछि टोलीले गरेको कामको कार्य सम्पन्न प्रतिवेदन गृह मन्त्रालयलाई उपलब्ध गराउनु पर्नेछ ।

**(५६) प्रमुख जिल्ला अधिकारीको जिम्मेवारी :**

१. जिल्लामा नागरिकताको प्रमाणपत्र वितरणको कामका लागि नेपाल सरकारले प्रमुख जिल्ला अधिकारीलाई पूर्ण रूपमा जिम्मेवार बनाएको छ । आफूलाई सुम्पिएको गहन राष्ट्रिय जिम्मेवारी तोकिएको समयमा नै पूरा गर्ने काममा प्रमुख जिल्ला अधिकारीले उच्च महत्वका साथ अग्रसरता लिनु पर्नेछ । टोली मार्फत नागरिकता वितरण कार्यलाई प्रमुख जिल्ला अधिकारीको कार्य सम्पादन मूल्याङ्कनको आधारका रूपमा लिइनेछ ।

२. टोलीमा खटिने कर्मचारीलाई आवश्यक अनुशिक्षणको व्यवस्था गरी कानून, नियम, कार्यविधि निर्देशिकाको बारेमा राम्रो जानकारी गराउने । कर्मचारीले बुझे नबुझेको बारे छलफल गर्ने र नागरिकताको कार्य प्रक्रियाका बारेमा नागरिकताको फाँटमा पूर्व अभ्यास सम्बन्धी प्रर्दशन (Demonstration) गर्ने । कर्मचारी नागरिकतासम्बन्धी ऐन, नियम, कार्यविधि र प्रक्रियाका सम्बन्धमा स्पष्ट भए नभएको यकिन गर्ने, नभएको भए पुनः छलफल गर्ने ।

३. राजनैतिक दल, पत्रकारहरू र नागरिक समाजका प्रतिनिधिहरू राखी नागरिकता टोलीबारे छलफल गरी जानकारी गराउने र जिल्लाभर सहयोगी वातावरण (Conducive Environment) तयार गर्ने र राजनैतिक दलका गाउँ स्तरमा रहेका इकाइहरूमार्फत सहयोग गरिदिन अनुरोध गर्ने ।

४. जिल्लामा नागरिकता टोली खटिएको कुराको जानकारी स्थानीय पत्रपत्रिका, एफ.एम., केबुल आदि संचारका माध्यमहरूबाट समाचारको रूपमा प्रचार प्रसारको व्यवस्था गर्ने ।

५. तोकिएको टोलीको संख्या र दरबन्दीका आधारमा टोलीमा खटिने कर्मचारीको व्यवस्था गर्ने ।

६. टोलीमा खटिने निजामती कर्मचारी जुनसुकै सरकारी कार्यालयबाट पनि खटाउनसक्ने ।

७. टोलीमा खटिने कर्मचारीलाई नियुक्ति दिने ।

८. टोलीमा खटिने टोली प्रमुखलाई प्रमुख जिल्ला अधिकारीले वंशज र जन्मको आधारमा नागरिकताको प्रमाणपत्र जारी गर्न सक्ने गरी अधिकार प्रत्यायोजन गर्नु पर्नेछ । त्यसरी अधिकार प्रत्यायोजन गर्दा टोलीले नागरिकताको प्रमाणपत्र जारी गर्नु पर्ने गाउँ विकास समिति र नगरपालिकासमेत तोक्नु पर्नेछ ।

९. गाउँ विकास समिति/नगरपालिकामा रहेका स्थानीय सरकारी कार्यालय र विद्यालयहरूबाट आवश्यक पर्ने भौतिक सुविधा र अन्य सहयोग उपलब्ध गराइदिन जिल्ला स्तरीय कार्यालय प्रमुखको बैठक राखी आवश्यक व्यवस्था मिलाउने ।

१०. टोलीमा खटिने कर्मचारीलाई सम्बन्धित गाउँ विकास समिति र नगरपालिकको पूरानो नागरिकताको रजिष्टर उपलब्ध गराउनु पर्नेछ ।

११. नागरिकताको प्रमाणपत्र वितरण टोली गाउँमा खटिएको समयमा स्थानीय स्तरमा फोटोग्राफर उपलब्ध हुनसक्ने/नसक्ने कुराको विचार गर्नु पर्नेछ । गाउँमा फोटोग्राफर नभई जनतालाई नागरिकताको फोटो खिचाउन असुविधा हुनसक्ने भएमा जिल्ला सदरमुकामबाटै फोटोग्राफर पठाउने व्यवस्था गर्नु पर्नेछ । त्यसरी फोटोग्राफर पठाउँदा जनतालाई सकभर सहुलियत दरमा फोटो खिचाउने व्यवस्था मिलाउनु पर्नेछ ।

१२. टोलीका लागि आवश्यक पर्ने अन्य सानातिना कुराहरू प्रमुख जिल्ला अधिकारीले व्यवस्था गर्नु पर्नेछ ।

१३. आफ्नो जिल्ला भित्रका नागरिकता टोलीहरूको भौगोलिक क्षेत्र/ईलाका अनुसार टोली नम्बर कायम गरी अभिलेख सहज बनाउने ।

१४. नागरिकताको प्रमाणपत्र जारी गर्ने कार्यको लागि गाउँ गाउँमा नागरिकताको टोलीमा खटिने कर्मचारी र नागरिकताको प्रमाणपत्र वितरणको काममा प्रयोग हुने अन्य कागजात र सामग्रीहरूको सुरक्षाका लागि नागरिकताको प्रमाणपत्र वितरण टोलीले माग गरेमा आवश्यक सुरक्षा व्यवस्था मिलाउनु पर्ने ।

१५. कुनै समस्या वा द्विविधा परेमा क्षेत्रीय प्रशासन कार्यालय र गृह मन्त्रालयसँग छिटो साधनबाट सम्पर्क गरी निकासा लिने ।

१६. साप्ताहिक रूपमा नागरिकता वितरण टोलीले नागरिकता वितरण गरेको कार्यको प्रगति अनिवार्य रूपमा क्षेत्रीय प्रशासन कार्यालयमा पठाउने ।

१७. नागरिकता वितरण टोलीको कामको रेखदेख, निरीक्षण, अनुगमन गरी आवश्यक सहयोग, निर्देशन र समन्वय गरी कार्यमा प्रभावकारीता ल्याउने ।

१८. नागरिकताको प्रमाणपत्र वितरणको कार्य सम्पन्न गरेपछि टोलीले गरेको कामको कार्य सम्पन्न प्रतिवेदन क्षेत्रीय प्रशासन कार्यालय र गृह मन्त्रालयलाई उपलब्ध गराउनु पर्नेछ ।

## परिच्छेद-१४

## नागरिकतासम्बन्धी सामान्य जानकारी

**(५७) नागरिकताको प्रमाणपत्र भनेको के हो ?**

नागरिकता कुनै पनि राज्यको वैध नागरिक रहेको तथ्यलाई पुष्टि गर्न व्यक्तिलाई राज्यले दिएको प्रमाण हो ।

**(५८) नागरिकतासम्बन्धी परिचय**

नागरिक राज्यको अभिन्न अंग हो । राज्यबाट प्राप्त हुनसक्ने सामाजिक, नागरिक, वैयक्तिक, राजनीतिक लगायतका सम्पूर्ण अधिकार प्राप्त र निश्चित कर्तव्य भएका व्यक्तिहरूलाई नागरिक भनिन्छ । साधारणतया संविधान अनुसार त्यस राष्ट्रमा बस्ने व्यक्तिलाई वंशज वा जन्मको आधारमा स्थायी बसोबास गरेका नाताले दिने नागरिक अधिकारलाई नागरिकता भनिन्छ ।

**(५९) नेपालमा नागरिकताको किसिम**

नेपालमा देहाय बमोजिमको नागरिकता प्रदान गर्न सकिने व्यवस्था छ :-

- वंशज (Jus Sanguinis)
- जन्म (Jus Soli)
- अङ्गीकृत (Naturalisation)
- सम्मानार्थ (Honorary)

**(६०) टोलीमा नागरिकता जारी गर्ने अधिकारी**

नागरिकताको प्रमाणपत्र वितरणको लागि प्रमुख जिल्ला अधिकारीले अधिकार प्रत्यायोजन गरी खटाएका निजामती सेवाका अधिकृत स्तरका कर्मचारी नागरिकताको प्रमाणपत्र जारी गर्ने अधिकारी हुनेछ ।

**(६१) दस्तुर**

नागरिकताको प्रमाणपत्र नेपाल सरकारद्वारा निःशुल्क उपलब्ध गराइनेछ । यसका लागि कुनै किसिमको सेवा शुल्क र दस्तुर लाग्ने छैन ।

**(६२) नागरिकता पाउने व्यक्तिले पालना गर्नु पर्ने शर्तहरू**

१. तोकिएको ढाँचामा पूरा विवरण भरी निवेदन दिनु पर्नेछ ।

२. निवेदनसाथ तोकिएबमोजिमका प्रमाणहरू पेश गर्नु पर्नेछ ।

३. निवेदन नेपाली नागरिकले मात्र दिनसक्ने छन् ।

४. निवेदकको नाम, थर, जात, बाबुको नाम, ठेगाना, राष्ट्रियताको विवरण गलत दिनुहुँदैन । ठीक साँचो हुनु पर्नेछ ।

**(६३) नागरिकता रद्द गर्न सक्ने अवस्था**

१. झुठो विवरण दिएमा ।

२. नाम, थर, जात, ठेगाना, बाबुको नाम, राष्ट्रियता ढाँटेमा ।

३. गैर नेपालीले नेपाली नागरिकताको प्रमाणपत्र लिएमा ।

(६४) **नागरिकता कायम नरहने अवस्था**

१. कुनै विदेशी मुलुकको नागरिकता प्राप्त गरेमा ।

२. नेपाली नागरिकता त्याग गरेको सूचना दर्ता गरेमा ।

(६५) **नागरिकतासम्बन्धी दण्ड सजायको व्यवस्था**

| | |
|---|---|
| झुठो विवरण दिई विदेशीले नागरिकता लिएमा | • १ वर्षदेखि ५ वर्षसम्म कैद वा<br>• रु. ५० हजारदेखि रु.१ लाखसम्म जरिवाना वा<br>• दुवै सजाय |
| विदेशीलाई नागरिकता दिलाउने कार्यमा सनाखत गरेमा वा सिफारिस गरेमा | • ६ महिनादेखि ३ वर्षसम्म कैद वा<br>• रु. २५ हजारदेखि रु.५० हजारसम्म जरिवाना वा<br>• दुवै सजाय |
| झुठो वा किर्ते नागरिकता प्रमाणपत्र तयार गरेमा | • १ वर्षदेखि ५ वर्षसम्म कैद वा<br>• रु. २० हजारदेखि रु.१ लाखसम्म जरिवाना वा<br>• दुवै सजाय |
| नागरिकताको विवरण आफूखुसी सच्याएमा | • ३ महिनासम्मकैद वा<br>• रु. १० हजारसम्म जरिवाना वा<br>• दुवै सजाय |
| नेपाली नागरिकले झुठो विवरण दिएमा | • रु.१५ हजारसम्म जरिवाना |
| नागरिकता सम्बन्धी ऐन नियमको बर्खिलाप कार्य गरेमा | • रु.१५ हजारसम्म जरिवाना |
| कर्मचारीले बदनियतपूर्वक नागरिकता दिएमा वा विवरण सच्याएमा | • विभागीय कारबाही |
| मतियारलाई | • मुख्य कसुरदारलाई हुने दण्ड सजायको आधा |

परिच्छेद-१५

## जिल्लागत कोड नम्बर

| सि.नं. | जिल्लाको नाम | कोड नं. | सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|---|---|---|
| १ | ताप्लेजुङ्ग | ०१ | ३९ | पाल्पा | ३९ |
| २ | पाँचथर | ०२ | ४० | अर्घाखाँची | ४० |
| ३ | इलाम | ०३ | ४१ | गुल्मी | ४१ |
| ४ | झापा | ०४ | ४२ | स्याङ्जा | ४२ |
| ५ | मोरङ्ग | ०५ | ४३ | तनहुँ | ४३ |
| ६ | सुनसरी | ०६ | ४४ | गोरखा | ४४ |
| ७ | धनकुटा | ०७ | ४५ | लमजुङ | ४५ |
| ८ | तेह्रथुम | ०८ | ४६ | कास्की | ४६ |
| ९ | भोजपुर | ०९ | ४७ | मनाङ | ४७ |
| १० | संखुवासभा | १० | ४८ | मुस्ताङ | ४८ |
| ११ | सोलुखुम्बु | ११ | ४९ | म्याग्दी | ४९ |
| १२ | खोटाङ | १२ | ५० | वाग्लुङ्ग | ५० |
| १३ | ओखलढुङ्गा | १३ | ५१ | पर्वत | ५१ |
| १४ | उदयपुर | १४ | ५२ | दाङ | ५२ |
| १५ | सिराहा | १५ | ५३ | प्यूठान | ५३ |
| १६ | सप्तरी | १६ | ५४ | रोल्पा | ५४ |

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| १७ | धनुषा | १७ |
| १८ | महोत्तरी | १८ |
| १९ | सर्लाही | १९ |
| २० | सिन्धुली | २० |
| २१ | रामेछाप | २१ |
| २२ | दोलखा | २२ |
| २३ | रसुवा | २३ |
| २४ | सिन्धुपाल्चोक | २४ |
| २५ | नुवाकोट | २५ |
| २६ | धादिङ्ग | २६ |
| २७ | काठमाडौं | २७ |
| २८ | ललितपुर | २८ |
| २९ | भक्तपुर | २९ |
| ३० | काभ्रेपलाञ्चोक | ३० |
| ३१ | मकवानपुर | ३१ |
| ३२ | रौतहट | ३२ |
| ३३ | बारा | ३३ |

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| ५५ | सल्यान | ५५ |
| ५६ | रुकुम | ५६ |
| ५७ | डोल्पा | ५७ |
| ५८ | मुगु | ५८ |
| ५९ | हुम्ला | ५९ |
| ६० | जुम्ला | ६० |
| ६१ | कालिकोट | ६१ |
| ६२ | जाजरकोट | ६२ |
| ६३ | दैलेख | ६३ |
| ६४ | सुर्खेत | ६४ |
| ६५ | बर्दिया | ६५ |
| ६६ | बाँके | ६६ |
| ६७ | कैलाली | ६७ |
| ६८ | डोटी | ६८ |
| ६९ | अछाम | ६९ |
| ७० | बाजुरा | ७० |
| ७१ | बझाङ्ग | ७१ |

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| ३४ | पर्सा | ३४ |
| ३५ | चितवन | ३५ |
| ३६ | नवलपरासी | ३६ |
| ३७ | रुपन्देही | ३७ |
| ३८ | कपिलवस्तु | ३८ |

| सि.नं. | जिल्लाको नाम | कोड नं. |
|---|---|---|
| ७२ | दार्चुला | ७२ |
| ७३ | बैतडी | ७३ |
| ७४ | डडेल्धुरा | ७४ |
| ७५ | कञ्चनपुर | ७५ |
| | | |

टिकट

**अनुसूची-१**

**(नियम ३ को उपनियम (१) र (३) नियम ४ को उपनियम (१) र नियम १६ को उपनियम (१) सँग सम्बन्धित)**

निवेदकको दुवै कान देखिने पासपोर्ट साइजको फोटो

**श्री प्रमुख जिल्ला अधिकारीज्यू,**

**जिल्ला प्रशासन कार्यालय,**

............................... ।

**विषय :- नेपाली नागरिकताको प्रमाणपत्र पाऊँ ।**

महोदय,

म वंशजको नाताले/जन्मका आधारले नेपाली नागरिक भएकोले देहायको विवरण खोली नेपाली नागरिकताको प्रमाणपत्र पाउनको लागि सिफारिस साथ रु. ५।- को टिकट टाँसी यो निवेदन पत्र पेश गरेको छु । मैले यसअघि नेपाली नागरिकताको प्रमाणपत्र लिएको छैन ।

| | |
|---|---|
| १. नाम, थरः- ............................................. | ७. बाबुको नागरिकता :- ..................................... |
| २. जन्मस्थानः- ............................................. | ८. आमाको नाम,थर र ठेगाना :- ........................... |
| ३. जन्म मितिः- ......... साल ........ महिना ..... गते (शैक्षिक प्रमाणपत्र हुनेले सोही मिति उल्लेख गर्ने) | ९. आमाको नागरिकता :- ................................... |
| ४. लिङ्ग :- ................................................... | १०. पति/पत्नीको नाम, थर र ठेगाना :- ..................... ............................................................. |
| ५. स्थायी वासस्थान :- .................................... | ११. पतिरपत्नीको नागरिकता :- ................................. |
| ६. बाबुको नाम, थर र ठेगाना :- ........................ ............................................................. | १२. संरक्षकको नाम, थर र ठेगाना :- ........................ |

मैले माथि लेखिदिएको व्यहोरा ठीक साँचो हो । झुट्टा ठहरे कानून बमोजिम सहुँला बुझाउँला ।

भवदीय,

मितिः- ..............................................

निवेदकको दस्तखतः-

औंठाको छाप

| दायाँ | बायाँ |
|---|---|
| | |

## गाउँ विकास समिति/नगरपालिकाको सिफारिस

....................................... गाउँ विकास समिति/नगरपालिका/उपमहानगरपालिका/महानगरपालिका वडा नं. .......... मा मिति ............................ मा जन्म भई हाल सम्म स्थायी रुपमा बसोबास गरी आएका यसमा लेखिएका श्रीमान्/श्रीमती ..................................................................... को छोरा/छोरी/पत्नी वर्ष .......... को श्री/सुश्री/श्रीमती ....................................................... लाई म राम्ररी चिन्दछु । उपर्युक्त लेखिए बमोजिमको निजको व्यहोरा मैले जानेबुझेसम्म साँचो हो । निजलाई वंशज/जन्मका आधारले नागरिकताको प्रमाणपत्र दिए हुन्छ । उक्त विवरण झुट्ठा ठहरे कानून बमोजिम सहुँला बुझाउँला ।

मितिः-

कार्यालयको नाम र छापः- ..............................

..............................................................

सिफारिस गर्नेकोः-

दस्तखतः- ..........................................

नाम, थरः- .........................................

पदः- .................................................

**.............................. गाउँ विकास समिति/नगरपालिकाबाट सर्जमिन र सनाखतका लागि प्रेषित**

....................................... गाउँ विकास समिति/नगरपालिका/उपमहानगरपालिका/महानगरपालिका वडा नं. ............ बस्ने ............................................................ को छोरा/छोरी/पत्नी वर्ष ....... को श्री/सुश्री/श्रीमती ............................................................ ले ऐन र नियमले तोकेको प्रमाण पेश गर्न नसकेकोले निजलाई स्थलगत सर्जमिन र सनाखतको प्रकृया अवलम्वन गरी वंशजको नाता/जन्मको आधारमा नागरिकता सम्बन्धी निर्णय हुन प्रेषित गरिएको छ ।

मितिः-

कार्यालयको छापः- ................................ | दस्तखतः- ...........................................

....................................................... | नाम, थरः- ..........................................

पदः- ..................................................

**कार्यालयले भर्ने :**

| | |
|---|---|
| निवेदक/निवेदिका ...................................... मेरो आफ्नो ................ नाताका हुन् । निजलाई वंशजको नाताले/जन्मको आधारले नेपाली नागरिकताको प्रमाणपत्र दिएमा पछि सम्म फरक पर्ने छैन । फरक परेमा कानून बमोजिम सहुँला बुझाउँला भनी कार्यालयमा उपस्थित भई सनाखत सहिछाप गर्नेको<br>नाम : ...........................................................<br>ना.प्र.प.नं.......................................................<br>सहिछाप : .....................................................<br>मिति : ...................................... | माथिको विवरण बमोजिम मेरो रोहवरमा सनाखत सही छाप भएको ठीक साँचो हो । माथिको विवरण ठीक दुरुस्त छ, फरक छैन । फरक परेमा कानून बमोजिम सहन बुझाउन मञ्जुर छ भनी सहीछाप गर्ने निवेदकको<br>नाम : ...........................................................<br>सहिछाप : .....................................................<br>मिति : ........................................... |

| **सर्जमिनमा बस्नेको नाम, थर, ठेगाना** |
|---|
| १. |
| २. |
| ३. |
| ४. |
| ५. |

| **सनाखत गर्ने व्यक्तिको नाम, थर, ठेगाना** |
|---|
| १. |
| २. |
| ३. |

## निर्णय

यो अनुसूचीमा भएको सिफारिस, निवेदकको ................................... को सनाखत सहिछाप र संलग्न निम्न प्रमाणहरुको आधारमा निवेदकलाई वंशजको नाताले/जन्मको आधारले नेपाली नागरिकताको प्रमाणपत्र दिन उपयुक्त हुने देखि निर्णयार्थ पेश गरेको छु ।

## संलग्न प्रमाणहरु

१.

२.

३.

४.

५.

६.

वितरित ना.प्र.प.नं.    सनाखत गराउने    पेश गर्ने    सदर गर्ने

मिति :-

**अनुसूची-२**
**(नियम ८ को उपनियम (७) सँग सम्बन्धित)**

नेपाल सरकार, गृह मन्त्रालय
जिल्ला प्रशासन कार्यालय,
.................................. ।

**नेपाली नागरिकताको प्रमाणपत्र ।**

ना.प्र.नं. :

| दुवै कान देखिने अटो साइजको फोटो |
|---|

नाम,थर : ...................................................... लिङ्ग : .......................
जन्मस्थान : जिल्ला ................. गा.वि.स./ उ.म.न.पा. ................. वडा नं. .....
स्थायी वासस्थान-: जिल्ला .............. गा.वि.स./उ.म.न.पा. .............. वडा नं. .....
जन्ममिति : .....................साल .....................महिना.................गते...........
बाबुको नाम थर : ...................................................................................
ठेगानाः...................................................... नागरिकता : .......................
आमाको नाम थर : .................................................................................
ठेगानाः...................................................... नागरिकता : .......................

पति/पत्नीको नाम थर : .............................................................
ठेगानाः...................................... . नागरिकता : .........................

नेपाल नागरिकता ऐन, २०६३ बमोजिम यो नागरिकताको प्रमाणपत्र दिइएको छ ।

प्रमाणपत्र वाहकको नाम :
नागरिकताको किसिम :
प्रमाणपत्र वाहकको दस्तखत :

प्रमाणपत्र दिने अधिकारीको :
दस्तखत : ...........................................
नाम,थर : ..........................................
दर्जा : ..............................................
मिति : .............................................

औंठाको छाप

| दायाँ | वायाँ |
|---|---|
| | |

## अनुसूची-३

**(नियम ३ को उपनियम (२) को खण्ड (क) सँग सम्बन्धित)**

## स्थलगत सर्जमिन मुचुल्काको ढाँचा

## (वंशजको नाताले)

लिखितम तपसिल बमोजिमका हामीहरु आगे जिल्ला प्रशासन कार्यालय, ............................................ समक्ष/बाट नागरिकता वितरण कार्यको लागि खटिई आएको टोली नम्बर .................................. समक्ष यस जिल्लाको .......................................................................... गा.वि.स./ न.पा./उ.म.न.पा./म.न.पा. को वडा नं. .............. मा बसोबास गर्ने श्रीमान्/श्रीमती .................................................................. को छोरा/छोरी/श्रीमती .................................................................. ले नेपाली नागरिकताको प्रमाणपत्र पाउनका लागि निवेदन दिनु भएको सम्बन्धमा हामीहरुलाई सोधनी हुँदा हाम्रो चित्त बुझ्यो । निज निवेदक श्री/श्रीमती .................................................... का छोरा/छोरी/पत्नी हुन् । निज निवेदक वंशजको नाताले नेपाली नागरिक हुन् । निजलाई वंशजको नाताले नेपाली नागरिकता प्रमाणपत्र दिएमा फरक पर्ने छैन् । व्यहोरा फरक परेमा प्रचलित कानून बमोजिम हुने सजाय सहुँला बुझाउँला भनी हामी तपसिलका व्यक्तिहरुले सहिछाप गरी यो सर्जमिन मुचुल्का जिल्ला प्रशासन कार्यालय, ..................................../नागरिकता वितरण टोली नम्बर ...................... मार्फत नेपाल सरकारमा चढायौं ।

| सि.नं. | नामथर | वतन | ना.प्र.नं./ जारी मिति | लेखात्मक र रेखात्मक सहिछाप |
|---|---|---|---|---|
| १. | | | | |
| २. | | | | |
| ३. | | | | |
| ४. | | | | |
| ५. | | | | |

**रोहबरमा बस्ने व्यक्ति**

**काम तामेल गर्ने व्यक्तिको**

नाम, थर :-

दर्जा :-

दस्तखत :-

मिति :-

गाउँ विकास समिति/नगरपालिका/उपमहानगरपालिका/महानगरपालिकाका अध्यक्ष/प्रमुख वा प्रतिनिधि :

१)

२)

३)

**अनुसूची-४**

**(नियम ३ को उपनियम (२) को खण्ड (ख) सँग सम्बन्धित)**

## सनाखतको ढाँचा

## (वंशजको नाताले)

कार्यालय प्रयोजनको लागि

.............................. जिल्ला ............................................ गा.वि.स./न.पा./उ.म.न.पा./म.न.पा., वडा नं. .......... मा स्थायी बसोबास भएका श्रीमान्/श्रीमती ........................................................ का छोरा/छोरी/श्रीमती ...................................................... वास्तविक नेपाली नागरिक हुन् । निज निवेदक वंशजका सन्तति हुन् । निजलाई वंशजको नाताले नेपाली नागरिकताको प्रमाणपत्र दिएमा फरक पर्ने छैन । उक्त विवरण फरक परेमा प्रचलित कानून बमोजिम हुने सजाय सहुँला, बुझाउँला भनी आफ्नो राजिखुशीले जिल्ला प्रशासन कार्यालय, ............................./नागरिकता वितरण टोली नं. ................ समक्ष सर्जमिनस्थलमा उपस्थित भै हामी तपसिलका नेपाली नागरिकहरुले सही सनाखत गरिदियौं ।

| **सि.नं.** | **नामथर** | **वतन** | **ना.प्र.नं./ जारी मिति** | **लेखात्मक र रेखात्मक सहिछाप** |
|---|---|---|---|---|
| १. | | | | |
| २. | | | | |
| ३. | | | | |

**सनाखत गराउने कर्मचारीको**

नाम :-

पद :-

दस्तखत :-

मिति :-

**प्रमाणित गर्ने**

नाम :-

पद :-

दस्तखत :-

मिति :-

## अनुसूची-५
**(नियम ४ को उपनियम (३) को खण्ड (क) सँग सम्बन्धित)**

## स्थलगत सर्जमिन मुचुल्काको ढाँचा
**(जन्मको आधारमा)**

लिखितम तपसिल बमोजिमका हामीहरु आगे जिल्ला प्रशासन कार्यालय, ....................... समक्ष/बाट नागरिकता वितरण कार्यको लागि खटिई आएको टोली नम्बर .......... समक्ष यस जिल्लाको ....................................... गा.वि.स./ न.पा./उ.म.न.पा./म.न.पा. को वडा नं. .... मा बसोबास गर्ने श्रीमान्/श्रीमती .......................... को छोरा/छोरी/श्रीमती .................................. ले नेपाली नागरिकताको प्रमाणपत्र पाउनका लागि निवेदन दिनु भएको सम्बन्धमा हामीहरुलाई सोधनी हुँदा हाम्रो चित्त बुझ्यो । निज निवेदक श्री/श्रीमती ......................... का छोरा/छोरी/पत्नी हुन् । निज निवेदकको जन्म विक्रम सम्वत् २०४६ साल चैत्र मसान्त भित्र नेपाल सरहदभित्र भएको ठिक साँचो हो । निज निवेदक जन्मदेखि हालसम्म उल्लिखित स्थानमा स्थायी बसोबास रही आएको सत्य साँचो हो । निज निवेदक वास्तविक रुपमा जन्मका आधारले नेपाली नागरिकता प्रमाणपत्र पाउने व्यक्ति हुन् । निज निवेदकलाई जन्मका आधारले नेपाली नागरिकता प्रमाणपत्र दिएमा पछि सम्म फरक पर्ने छैन् । व्यहोरा फरक परेमा प्रचलित कानून बमोजिम हुने सजाय सहुँला बुझाउँला भनी हामी तपसिलका व्यक्तिहरुले सहिछाप गरी यो सर्जमिन मुचुल्का जिल्ला प्रशासन कार्यालय, ............................/नागरिकता वितरण टोली नम्बर .......... मार्फत नेपाल सरकारमा चढायौं ।

| सि.नं. | नामथर | वतन | ना.प्र.नं./ जारी मिति | लेखात्मक र रेखात्मक सहिछाप |
|---|---|---|---|---|
| १. | | | | |
| २. | | | | |
| ३. | | | | |
| ४. | | | | |
| ५. | | | | |

**रोहबरमा बस्ने व्यक्ति**

**काम तामेल गर्ने व्यक्तिको**

नाम, थर :-

दर्जा :-

दस्तखत :-

मिति :-

गाउँ विकास समिति/नगरपालिका/उपमहानगरपालिका/महानगरपालिकाका अध्यक्ष/प्रमुख वा प्रतिनिधि :

**अनुसूची-६**

**(नियम ४ को उपनियम (३) को खण्ड (ख) सँग सम्बन्धित)**

## सनाखतको ढाँचा

## (जन्मको आधारमा)

कार्यालय प्रयोजनको लागि

...................... जिल्ला ............................................... गा.वि.स. / न.पा. / उ.म.न.पा. / म.न.पा., वडा नं. ................ मा स्थायी बसोबास भएका श्रीमान्/श्रीमती .............................................. का छोरा/छोरी/श्रीमती .............................................. वास्तविक नेपाली नागरिक हुन् । निज निवेदकको जन्म विक्रम सम्वत् २०४६ साल चैत्र मसान्तभित्र नेपाल सरहदभित्र भएको ठिक साँचो हो । निज निवेदक जन्मदेखि हालसम्म उल्लिखित स्थानमा स्थायी बसोबास गरी आएको व्यहोरा सत्य साँचो हो । निजलाई जन्मको आधारमा नेपाली नागरिकताको प्रमाणपत्र दिएमा पछि सम्म फरक पर्ने छैन । उक्त विवरण फरक परेमा प्रचलित कानून बमोजिम हुने सजाय सहुँला, बुझाउँला भनी आफ्नो राजिखुशीले जिल्ला प्रशासन कार्यालय, ........................./नागरिकता वितरण टोली नं. ................. समक्ष सर्जमिनस्थलमा उपस्थित भै हामी तपसिलका नेपाली नागरिकहरुले सहि सनाखत गरिदियौं ।

| सि.नं. | नामथर | वतन | ना.प्र.नं./ जारी मिति | लेखात्मक र रेखात्मक सहिछाप |
|---|---|---|---|---|
| १. | | | | |
| २. | | | | |
| ३. | | | | |

**सनाखत गराउने कर्मचारीको**

नाम :-

पद :-

दस्तखत :-

मिति :-

**प्रमाणित गर्ने**

नाम :-

पद :-

दस्तखत :-

मिति :-

**अनुसूची-७**

**(नियम ५ को उपनियम (१) र नियम ७ को उपनियम (१), (२) र (५) सँग सम्बन्धित)**

| |
|---|
| दुवै कान देखिने पासपोर्ट साइजको फोटो |

**श्री प्रमुख जिल्ला अधिकारी,**

**जिल्ला प्रशासन कार्यालय**

............................ ।

**विषय :- नेपालको नागरिकताको प्रमाणपत्र पाऊँ ।**

महोदय,

मैले नेपाल नागरिकता ऐन, २०६३ को दफा ५ बमोजिमको शर्त तथा अवस्था पूरा गरिसकेकोले नेपाली नागरिकको छोरा, छोरी वा नेपाली नागरिकसंग वैवाहिक सम्बन्ध भएको विदेशी महिलाको हैसियतले नेपालको अंगीकृत नागरिकताको प्रमाणपत्र पाउनको लागि देहायको विवरण खोली सिफारिस साथ रु.५/- को टिकट टाँसी यो निवेदनपत्र पेश गरेको छु ।

१. **मेरो विवरण :-**

(क) पूरा नाम, थर :-

(ख) जन्मस्थान :-

(ग) जन्म मिति :- ................साल ............. महिना ......... गते

(घ) पूरा गरेको उमेर :-

(ङ) लिङ्ग :-

(च) धर्म :-

(छ) बाबुको :- (क) नाम, थर :-

(ख) ठेगाना :-

(ग) नागरिकता :-

(ज) आमाको :- (क) नाम, थर :-

(ख) ठेगाना :-

(ग) नागरिकता :-

(झ) पतिको नाम, थर र ठेगाना :-

२. **नेपालमा बसोबास गरेको वर्ष :-**

(क) नेपाली नागरिकको छोरा वा छोरीको हकमा -

१) पिताको राष्ट्रियता

२) पिताको मुलुकबाट नागरिकता प्रमाणपत्र लिए नलिएको निस्सा

(ख) नेपाली नागरिकसँग वैवाहिक सम्बन्ध भएको विदेशी महिलाको हकमा -

(श्री ...................................... संग विवाह भएको मिति)

(ग) अरु विदेशीको हकमा (कम्तीमा पन्ध्र वर्ष) :-

३. **नेपालमा बसोबास गरेको ठाउँ र मिति :-**

(क) जिल्ला ......................... गाउँ/नगर ..............................

वडा नं. ....................... टोल/गाउँ ................................

(ख) खण्ड (क) मा लेखिएको स्थानमा आई अटुट रुपमा बसेको मिति :-

४. **हाल साथमा रहेको परिवारको विवरण र संख्या :-**

| (क) छोरा | (ख) छोरी | (ग) पति वा पत्नी |
|---|---|---|
| १. | १. | १. |
| २. | २. | |
| ३. | ३. | |

५. मैले नेपाली वा नेपालमा प्रचलित ................... भाषा बोल्न र लेख्न जानेको छु।

६. मेरो जीवन निर्वाह गर्ने :

(क) साधन :-

(ख) योग्यता :-

(ग) हालको व्यवसाय :-

७. विदेशी मुलुकको नागरिकता नलिएको वा त्यागेको वा त्याग्न कारबाही चलाएको विवरण :-

(क) म पहिले नागरिक रहेको विदेशी मुलुकको नाम :-

(ख) खण्ड (क) मा लेखिएको मुलुकको नागरिकता नलिएको वा सो मुलुकको कानून बमोजिम मिति .......................... मा त्यागिसकेको वा त्याग्न कारबाही चलाएको।

(ग) खण्ड (क) मा लेखिएको मुलुकको नागरिकता हाल सम्म नलिएको वा त्यागिसकेको वा त्याग्न कारबाही चलाएको रीतपूर्वकको निस्सा नेपाल सरकारलाई मिति ................. मा दिएको। त्यसरी दिएको निस्साको प्रतिलिपि यसैसाथ संलग्न छ।

८. मैले नैतिक पतन देखिने कुनै फौज्दारी मुद्दामा सजाय पाएको छैन। मैले माथि लेखी दिएको व्यहोरा ठीक साँचो हो। झुट्टा ठहरे कानून बमोजिम सहुँला बुझाउँला।

मिति :- .....................

भवदीय,

निवेदकको दस्तखत :-

औंठाको छाप

| **दायाँ** | **बायाँ** |
|---|---|
| | |

## गाउँ विकास समिति/नगरपालिकाको सिफारिस

............................ देशमा जन्म भई ................................................ गाउँ विकास समिति/नगरपालिका/उपमहानगरपालिका/महानगरपालिका ...................... नं. वडा ...................... मा स्थायी बसोबास गर्दै आएको यसमा लेखिएका श्री ............................................. को छोरा/छोरी/पत्नी वर्ष ............ को श्री/सुश्री/श्रीमती ................................................ लाई म राम्ररी चिन्दछु। उपर्युक्त लेखिए बमोजिमको निजको व्यहोरा मैले जाने बुझेसम्म साँचो हो। झुठ्ठा ठहरे कानून बमोजिम सहुँला बुझाउँला।

मिति :-

कार्यालयको नाम र छाप :- ..................................

सिफारिस गर्नेको :-

दस्तखतः- ........................................

नाम, थर :- .....................................

पद :- ..........................................

**अनुसूची- ८**

**(नियम ७ को उपनियम (४) र नियम ८ को उपनियम (७) सँग सम्बन्धित)**

**नेपाल सरकार**
**गृह मन्त्रालय**

..........................................

**अंगीकृत नेपाली नागरिकताको प्रमाणपत्र ।**

ना.प्र.नं. :

| |
|---|
| दुवै कान देखिने अटो साइजको फोटो |

नाम,थर : ...........................................................................

जन्मस्थान : जिल्ला .............. गा.वि.स./उ.म.न.पा. ............. वडा नं. .....

हालको ठेगाना -: जिल्ला .............. गा.वि.स./उ.म.न.पा. ...................

वडा नं. .............. टोल ...............

जन्ममिति : .............साल ...............महिना..............गते...........

लिङ्ग : .................

बाबुको नाम थर, ठेगाना : .........................................................

नागरिकता : ..............................................

आमाको नाम थर, ठेगाना : .........................................................

नागरिकता : .................................

पतिको नाम थर, ठेगाना : ..........................................................

नागरिकता : ..............................

नेपाल नागरिकता ऐन, २०६३ बमोजिम अंगीकृत नेपाली नागरिकताको प्रमाणपत्र दिइएको छ ।

निर्णय मिति :- .......................................

नागरिकताको किसिम :- वैवाहिक अंगीकृत/अंगीकृत

प्रमाणपत्र वाहकको नाम :

प्रमाणपत्र वाहकको सही :

औठाको छाप

| दायाँ | बायाँ |
|---|---|
| | |

प्रमाणपत्र दिने अधिकारीको,-

दस्तखत :-

नाम,थर :-

दर्जा :-

मिति :-

## अनुसूची-९

**(नियम ९ को उपनियम (१) सँग सम्बन्धित)**

श्री ..........................................,

......................................... ।

महोदय,

निम्न लिखित व्यहोराले गर्दा मैले नेपालको नागरिकता त्याग गर्न आवश्यक भएकोले त्याग गरेको सूचना गरेको छु। यो सूचना दर्ता गरी दिनु हुन अनुरोध गर्दछु।

(१)

(२)

(३)

**अरु विवरण :**

हालमा मेरो बसोबास भएको ठाउँः .................................... मेरो ना.प्र.नं. :-

बाबुको नाम :- .............................................. ना.प्र.प. जारी मिति :-

बाजेको नाम :- .............................................. ना.प्र.प. जारी स्थान :-

मेरो उमेर :- .................................................

मेरो परिवारका सदस्यहरुको संक्षिप्त विवरण :

| **नाम** | **उमेर** | **ठेगाना** | **ना.प्र.प. सम्बन्धी विवरण** |
|---|---|---|---|
| १) | | | |
| २) | | | |
| ३) | | | |

औंठाको छाप

| दायाँ | बायाँ |
|---|---|
| | |

नागरिकता त्याग गर्नेको फोटो

दुवै कान देखिने पासपोर्ट साइजको फोटो

नागरिकता त्याग गर्नेको दस्तखतः-

नाम, थर :-

साविक ठेगाना :-

हालको बसोबासको ठेगाना :-

## अनुसूची-१०

**(नियम ९ को उपनियम (४) संग सम्बन्धित)**

**नागरिकता त्याग गर्नेको विवरण**

| क्रम संख्या | दर्ता मिति | नाम थर | ना.प्र.नं. | ना.प्र. जारी मिति र स्थान | हालको बसोबासको ठाउँ | नेपालमा बसोबासको ठाउँ | नेपाली नागरिकता परित्याग गर्नु पर्ने कारण | परिवारका सदस्यमध्ये नेपाली नागरिक भै वस्नेहरुको नाम ठेगाना | दर्ता गर्नेको हस्ताक्षर |
|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | | | |

**अनुसूची-११**

**(नियम ११ को उपनियम (१) सँग सम्बन्धित)**

| |
|---|
| सूचना गर्ने व्यक्तिको फोटो (दुवै कान देखिने पासपोर्ट साइजको) |

**श्री** ..........................................

.............................................. ।

**विषय : नेपाली नागरिकता पुनः कायम हुनको लागि दर्ता गरी पाउँ ।**

महोदय,

म नेपाली नागरिक ............ मुलुकको नागरिकता परित्याग गरी नेपालमा आई बसोबास गरेकोले देहायमा लेखिएका विवरणहरु नेपाल नागरिकता ऐन, २०६३ को दफा ११ बमोजिम दर्ता गरी दिनु हुनु अनुरोध गर्दछु ।

(१) पूरा नाम र थर :- ..........................................................................

(२) जन्मस्थान :- ...............................................................................

(३) जन्म मिति :- ...............................................................................

(४) पूरा गरेको उमेर :- ........................................................................

(५) नागरिकता प्रमाणपत्र नं. :-..................................................................

(६) नागरिकता प्रमाणपत्र जारी मिति :- .....................................................

(७) नागरिकताको किसिम :- ...................................................................

(८) नेपालमा आई बसोबास गरेको मिति .....................................

(९) हाल बसोबास गरेको स्थान ............ जिल्ला ......................... गा.वि.स./न.पा./उ.म.न.पा./म.न.पा.

(१०) बाबुको नाम, थर र ठेगाना ..............................................................

(११) बाबुको नागरिकता नं. .....................................................................

भवदीय,

मिति :-

सूचना गर्ने व्यक्तिको

दस्तखत ........................

औठाको छाप

| दायाँ | बायाँ |
|---|---|
| | |

**अनुसूची-१२**

**(नियम ११ को उपनियम (२) सँग सम्बन्धित)**

नेपाल सरकार

........................ कार्यालय

**विषय :- सूचनाको दर्ता ।**

........................ जिल्ला .................................... गा.वि.स./न.पा./उ.म.न.पा./म.न.पा. वडा नं. ........ मा वस्ने श्री .............................. को छोरा/छोरी हाल नेपालको ........................... अञ्चल .............................. जिल्ला .............................. गा.वि.स./न.पा./उ.म.न.पा./म.न.पा. वडा नं. ........... मा वस्ने वर्ष .................... को सुश्री/श्रीमती ......................................... को नेपाल नागरिकता ऐन, २०६३ को दफा ११ बमोजिमको सूचना दर्ता गरिएको छ ।

सूचना गर्ने व्यक्तिको

दस्तखत :................

औंठाको छाप

| दायाँ | बायाँ |
|---|---|
| | |

सूचना गर्ने व्यक्तिको फोटो दुवै कान देखिने पासपोर्ट साइजको

सूचना दर्ता गर्ने अधिकारीको

दस्तखत :-

नाम र थर :- ............................

दर्जा :- ...................................

कार्यालय :- ..............................

सूचना दर्ता गरेको मिति :-

नेपाल सरकार
गृह मन्त्रालय
जिल्ला प्रशासन कार्यालय, ................

वंशज जन्मको आधारमा नागरिकता प्रमाणपत्र वितरण अभिलेख

ना.प्र.प. जारी गर्ने अधिकारीको नामथर र पद :

| सि.नं. | ना.प्र.नं. र जारी मिति | नाम र जन्म मिति | ठेगाना | बाबु/आमा को नामथर | पति/पत्नीको नाम,थर | | औंठाको छाप र दस्तखत | | फोटो | सिफारिस कर्ताको नामथर र पद | सनाखत गर्नेको नाम,थर र ना.प्र.नं. | पेश भएका कागजातहरु | कैफियत |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| | | | | | | | दायाँ | बाँया | | | | | |
| | ना.नं. :<br>मिति : | नाम :<br>जन्ममिति : | १. जन्मस्थान<br>.......................<br>२. स्थायी ठेगाना<br>...................... | | | | | | | | १.<br>२.<br>३. | १.<br>२.<br>३.<br>४. | |
| | ना.नं. :<br>मिति : | नाम :<br>जन्ममिति : | १. जन्मस्थान<br>.......................<br>२. स्थायी ठेगाना<br>...................... | | | | | | | | १.<br>२.<br>३. | १.<br>२.<br>३.<br>४. | |
| | ना.नं. :<br>मिति : | नाम :<br>जन्ममिति : | १. जन्मस्थान<br>.......................<br>२. स्थायी ठेगाना<br>...................... | | | | | | | | १.<br>२.<br>३. | १.<br>२.<br>३.<br>४. | |
| | ना.नं. :<br>मिति : | नाम :<br>जन्ममिति : | १. जन्मस्थान<br>.......................<br>२. स्थायी ठेगाना<br>...................... | | | | | | | | १.<br>२.<br>३. | १.<br>२.<br>३.<br>४. | |
| | ना.नं. :<br>मिति : | नाम :<br>जन्ममिति : | १. जन्मस्थान<br>.......................<br>२. स्थायी ठेगाना<br>...................... | | | | | | | | १.<br>२.<br>३. | १.<br>२.<br>३.<br>४. | |
| | ना.नं. :<br>मिति : | नाम :<br>जन्ममिति : | १. जन्मस्थान<br>.......................<br>२. स्थायी ठेगाना<br>...................... | | | | | | | | १.<br>२.<br>३. | १.<br>२.<br>३.<br>४. | |
| | ना.नं. :<br>मिति : | नाम :<br>जन्ममिति : | १. जन्मस्थान<br>.......................<br>२. स्थायी ठेगाना<br>...................... | | | | | | | | १.<br>२.<br>३. | १.<br>२.<br>३.<br>४. | |

**नेपाल सरकार**

**गृह मन्त्रालय**

**जिल्ला प्रशासन कार्यालय, ........................**

मितिः-............................

**विषयः- नामावली प्रकाशित गरिएको सूचना ।**

मिति ............................ मा यस कार्यालयबाट नागरिकता प्रमाणपत्र प्राप्त गर्ने व्यक्तिहरुको नामावली सम्बन्धित सवैको जानकारीको लागि प्रकाशित गरिएको छ ।

| सि.नं. | नाम,थर | ठेगाना | बाबु/आमा/ पतिको नामथर | नागरिकता नं. | वंशज | जन्म | कैफियत |
|---|---|---|---|---|---|---|---|
| १ | | | | | | | |
| २ | | | | | | | |
| ३ | | | | | | | |
| ४ | | | | | | | |
| ५ | | | | | | | |

दस्तखत गर्ने अधिकृतकोः-

नाम, थर :-

पदः-

# दस्तखत नमूना कार्ड

कार्यालयको नामः-

नागरिकता प्रमाणपत्रमा दस्तखत गर्ने अधिकृतको नामः-

पदः-

दस्तखत नमूनाः-

१) ......................................

२) ......................................

दस्तखत प्रमाणित गर्ने अधिकृतको

दस्तखतः- ................................

नामः- ......................................

दर्जाः- .....................................

मितिः- ....................................

(नोटः- दस्तखत नमूना कार्डको लागि ४" × ६" आकारको कडा कागज प्रयोग गर्नुहोला)

**नेपाल सरकार**

**गृह मन्त्रालय**

**जिल्ला प्रशासन कार्यालय, ........................**

**नागरिकता टोली नं. ................**

**<u>वितरित नागरिकता प्रमाणपत्रको मास्केवारी</u>**

**श्री जिल्ला प्रशासन कार्यालय,**

........................... ।

मिति : ...................................

| सि.नं. | नागरिकताको किसिम | हालसम्मको वितरण | यस हप्ताको वितरण | हालसम्म जम्मा वितरण | कैफियत |
|---|---|---|---|---|---|
| १. | वंशजको नाता | | | | |
| २. | जन्मको आधार | | | | |

पेश गर्ने
कर्मचारीको नाम थर :
पद :

प्रमाणित गर्ने
अधिकृतको नाम, थर :
पद :

**नेपाल सरकार**

**गृह मन्त्रालय**

**जिल्ला प्रशासन कार्यालय, ........................**

**नागरिकता प्रमाणपत्र कार्ड र सुरक्षा चिन्हको आम्दानी खर्चको मास्केवारी**

मिति : ............................

| विवरण | शुरु प्राप्त संख्या | यस महिनामा प्राप्त संख्या | जम्मा संख्या | बिग्री रद्द भएको संख्या | यस महिनामा भएको खर्च संख्या | बाँकी संख्या | कैफियत |
|---|---|---|---|---|---|---|---|
| ना.प्र.प. कार्ड | | | | | | | |
| होलोग्राम | | | | | | | |
| कूल | | | | | | | |

पेश गर्ने
कर्मचारीको नाम थर :
पद :

प्रमाणित गर्ने
अधिकृतको नाम, थर :
पद :

**श्रीमान् टोली प्रमुखज्यू,**

**नागरिकता वितरण टोली नम्बर ................,**

..........................**जिल्ला ।**

**विषय :- <u>नाम दर्ता गरिपाउँ ।</u>**

म नेपाली नागरिक हुँ । मेरो सगोल परिवारका तपसिलमा लेखिए बमोजिमका नाताका व्यक्तिको नाम नागरिकताको नाबालक/बालीग छुट रजिष्टरमा नाम दर्ता गरिपाउँ भनी रु.५।- को टिकट टाँसी यो निवेदन पेश गरेको छु ।

**<u>नाबालक</u>**

| | नामथर | जन्ममिति | नाता |
|---|---|---|---|
| १. | | | |
| २. | | | |
| ३. | | | |
| ४. | | | |
| ५. | | | |

**<u>बालीग छुट</u>**

| | नामथर | जन्ममिति | नाता |
|---|---|---|---|
| १. | | | |
| २. | | | |
| ३. | | | |
| ४. | | | |

**<u>निवेदक</u>**

दस्तखत :

नामथर :

ठेगाना :

ना.प्र.प.नं.:

नागरिकता टोली नं. ..............................

**छुट भएका उमेर पुगेका व्यक्ति/नाबालक दर्ता निस्सा**

दर्ता नं. (क्र.सं.) ........................... .......................... .............................. .........................

नाम दर्ता गर्ने कर्मचारीको सही

**नेपाल सरकार**

**गृह मन्त्रालय**

**जिल्ला प्रशासन कार्यालय, ............. ।**

**छुट भएका उमेर पुगेका व्यक्तिको दर्ता पुस्तिका**

गा.वि.स./उ.म.न.पा. .............

| क्र.सं. | घर नं. | बाबु वा आमाको नाम थर | बाबु वा आमाको ना.प्र.नं. | छुट भएका उमेर पुगेका व्यक्तिको नामथर | जन्म मिति | वडा नं. | कैफियत |
|---|---|---|---|---|---|---|---|
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |

**नेपाल सरकार**

**गृह मन्त्रालय**

**जिल्ला प्रशासन कार्यालय, ............. ।**

**नाबालक दर्ता पुस्तिका**

गा.वि.स./उ.म.न.पा. .............

| क.सं. | घर नं. | बाबु वा आमाको नाम थर | बाबु वा आमाको ना.प्र.नं. | नाबालकको नामथर | जन्म मिति | वडा नं. | कैफियत |
|---|---|---|---|---|---|---|---|
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |
| | | | | | | | |

**श्री प्रमुख जिल्ला अधिकारीज्यू,**
**जिल्ला प्रशासन कार्यालय,**
................................ ।

**विषयः- <u>नेपाली नागरिकता प्रमाणपत्रको प्रतिलिपि पाउँ ।</u>**

महोदय,

मैले मेजिष्ट्रेट अफिस काठमाडौं/वागमती अञ्चलाधीशको कार्यालय/यसै कार्यालयबाट देहायको विवरण भएको नेपाली नागरिकता प्रमाणपत्र लिएकोमा सो प्रमाणपत्रको सक्कल प्रति झुत्रो भएको/हराएको हुँदा सोको प्रतिलिपि पाउनका लागि सो नागरिकता प्रमाणपत्रको सक्कल/नक्कल प्रति संलग्न राखी रु. ५।- को टिकट टाँसी सिफारिस सहित यो निवेदन पेश गरेको छु ।

मैले नागरिकता प्रमाणपत्र लिंदाको विवरण यसप्रकार छ :-

१. ना.प्र.प. नं. ............................ मितिः- .............................................

२. (क) नाम, थरः ........................................................................................

(ख) जन्म स्थानः ................. अञ्चल .................... जिल्ला ........................ उ.म.न.पा./गा.वि.स. वडा नं. ....................... टोल ........................................

(ग) स्थायी ठेगानाः .............. अञ्चल ..................... जिल्ला ........................ उ.म.न.पा./गा.वि.स. वडा नं. ....................... टोल ........................................

(घ) जन्म मितिः ............................... वा वर्षः .......................................

(ङ) बाबुको नाम थर, वतनः ..........................................................................

(च) आमाको नाम थर, वतनः ..........................................................................

(छ) पतिको नाम थर, वतनः ...........................................................................

(ज) नागरिकताको किसिमः .............................................................................

माथि लेखिएको विवरण मैले .............................................. कार्यालयबाट लिएको नं. ............. को ना.प्र.प. को व्यहोरासंग दुरुस्त छ फरक छैन । लेखिएको व्यहोरा झुट्ठा ठहरेमा कानून बमोजिम सहुँला बुझाउँला ।

औंठाको छाप

| दायाँ | बायाँ |
|---|---|
| | |

निवेदकको
दस्तखतः .........................................
नाम,थरः .........................................
मितिः ..............................................

## (प्रतिलिपि ना.प्र.प. का लागि सिफारिस)

............... गाउँ विकास समिति/नगरपालिका/उपमहानगरपालिका/महानगरपालिका वडा नं. .......... मा मिति .................. मा जन्म भई हाल सम्म स्थायी रुपमा बसोबास गरी आएका यसमा लेखिएका श्रीमान्/श्रीमती ....................................................... को छोरा/छोरी/पत्नी वर्ष ..... को श्री/सुश्री/श्रीमती ............................................. लाई म राम्ररी चिन्दछु । निजको माग बमोजिम उपर्युक्त विवरण भएको नं. ............. मिति ........... को नागरिकता प्रमाणपत्रको सक्कल प्रति भुत्रो भएको/हराएको व्यहोरा साँचो हुँदा प्रतिलिपि बनाई दिएमा फरक नपर्ने व्यहोरा सिफारिस गर्दछु । उक्त विवरण भुट्टा ठहरे कानून बमोजिम सहुँला बुझाउँला ।

| | |
|---|---|
| मितिः- | सिफारिस गर्नेकोः- |
| कार्यालयको नाम र छापः- ................. | दस्तखतः- ....................................... |
| .................................................. | नाम, थरः- ...................................... |
| | पदः- .............................................. |

निवेदकको फोटो